# इस्लामको जीवन व्यवस्था



लेखक :
सय्यद अबुलआला मौदूदी



अनुवादक :
प्राध्यापक कुमार छेत्री
कालिम्पोङ्



**'ISLAM KO JEEWAN VYAWASTHA'**

*BY* :
**SAYYED ABUL A'LA MAUDUDI**

# भूमिका

धर्म तथा मजहब भन्नाले कति मानिसहरूले यति मात्र बुझेको देखिन्छ कि यो मानिसको नैतिक सुधारको एक व्यवस्था हो अनि अदृश्य ईश्वरको स्मरण गर्दै उनको उपासना औ पूजाको केही सिद्धान्तमाथि अमल गरेर मानिसहरूबीच शान्ति एवं सन्तोष दिने नियम मात्र हो। मानिसहरूमा प्रायः यो विचार पनि पाइन्छ कि धर्मको, मानिसको अरू व्यक्तिगत एवं सामाजिक जीवनसित कुनै सम्बन्ध छैन, न कुनै धर्ममा यो क्षमता पाइन्छ कि त्यसले नव-युगको जटिल एवं उलझनपूर्ण समस्याहरूलाई समाधान गर्नसक्छ।

इस्लामको गहिरो अध्ययन गर्ने व्यक्तिहरू भलीभाँति जान्दछन् कि इस्लामको बारेमा उक्त धारणाहरू ठीक छैनन्। यो पुस्तिका एकजना महान विचारशील विद्वानको अल्प भाषण हो जसमा बताइएको छ—नैतिक, आध्यात्मिक व्यवस्थाहरूको संगसंगै मानिसको आर्थिक, सामाजिक र राजनैतिक व्यवस्थाहरूलाई ठीक ढाँचामा चलाउनुको निम्ति इस्लामले के समाधान प्रस्तुत गर्दछ। नेपाली भाषीवर्गको निम्ति निसंकोच यो एउटा लाभदायक पुस्तिका ठहर्ला। यो पुस्तिकालाई नेपालीमा अनुतरित गरिदिनु भएकोमा हामी प्राध्यापक श्री कुमार छेत्रीप्रति आभारी छौं।

—प्रकाशक

# विषय-सूची

# इस्लामको नैतिक व्यवस्था

मनुष्यको नैतिक अनुभूति एक प्राकृतिक भावना हो जसको कारणले कतिपय विशेषताहरू रूचिकर र अन्य कतिपय भने अरूचिकर प्रतीत हुन्छ। यो भावना व्यक्तिगत रूपमा मनुष्यभित्र कम-बेसी हुनसक्छ तर सामूहिक रूपमा मानवविवेकले एक स्वरसंग केही विशेषताहरूलाई प्रशंसनीय र कतिलाई निन्दनीय ठह-याएको छ। सत्य, न्याय, वचनपालन एवं विश्वासपात्रतालाई मानव आचारशास्त्रमा शुरूदेखि नै प्रशंसा गर्न योग्य मानिएको छ तर असत्य, अत्याचार, वचनभंग एवं विश्वासघातलाई कहिले पनि उत्तम ठानिएन। सहानुभूति, दया, उदारता र हृदयको विशालताको सधैं सम्मान भएको छ तर स्वार्थप्रियता, पाषाणहृदयता, कृपणता र दृष्टि सकीर्णताको कहिले पनि प्रशंसा गरिएन। सन्तोष र शान्ति, धीरता र गम्भीरता, उच्चसङ्कल्पता र वीरता जस्ता गुणको सधैं प्रशंसा गरिएको छ भने असन्तोष, तुच्छता, संकीर्णता, साहसहीनता एवं कायरतालाई कहिले पनि साधुवाद जनाइएन अथवा प्रशंसाको पुष्प-वृष्टि गरिएन। मनोनिग्रह, स्वाभिमान, शिष्टता एवं मिलनसारीलाई सधैं गुणमै गणना गरिएको छ भने इन्द्रियदासता, क्षुद्रता, अशिष्टता एव तुच्छताले कदापि नैतिक गुणको सूचीमा ठाउँ पाएको छैन। कर्तव्यपरायणता, तत्परता र दायित्वको अनुभूतिलाई सधैं सम्मान गरिएको छ तथा कर्तव्यविमुख, अविश्वासी, उद्योगविमुख र दायित्वबोधले रहित व्यक्तिहरूलाई कहिले पनि सम्मानित दृष्टिले हेरिएन। यसरी नै सामूहिक जीवनका राम्रा र नराम्रा विशेषताहरूबारे पनि मानवताको निर्णय प्राय: सर्वसम्मत रहेको छ। जुन समाजमा अनुशासन र नियन्त्रण हुन्छ पारस्परिक सहयोग र सहायताको भावना हुन्छ, प्रेम र कल्याणको कामना हुन्छ अनि सामूहिक न्याय र सामाजिक समानता हुन्छ त्यो समाजको सधैं सम्मान भएको छ। विश्रृंखलता अव्यवस्था, अवैधानिकता,

मतभेद, परस्परको अमङ्गल-कामना, अत्याचार र विषमताहरू सामूहिक जीवनको गुणको रूपमा कदापि गणना भएन। सच्चरित्रता र दुश्चरित्रताको विषय पनि यस्तै हो। चोरी, व्यभिचार, हत्या, लुटपाट, षड्यन्त्र र घूसलाई कहिले पनि सत्कर्म ठानिएन। अभद्रता, उत्पीड़न, परनिन्दा, पाशविकता, ईर्ष्या, दोषारोपण र उपद्रवलाई कहिले पनि सज्जनता मानिएन। कपटी, अभिमानी, घमण्डी, छली, दुराग्रही र ईर्ष्यालु व्यक्तीहरूलाई कहिले पनि सज्जन भनिएन। यसको विपरीत माता-पिताको सेवा, आफन्तहरूलाई सहायता, छिमेकीहरूसंग सद्व्यवहार, मित्रहरूलाई सहयोग, दुर्बलहरूको समर्थन, अनाथ र दीन-दुःखी-हरूको हेरचाह, रोगीहरूको उपचार अनि विपद्मा परेकाहरूको सहायतालाई सधैं सज्जनता सम्भिएको छ। सच्चरित्र, सद्भाषी शान्तिप्रिय र लोककल्याण गर्न इच्छुक व्यक्तिलाई सधैं सम्मानको दृष्टिले हेरिएको छ। मानवताले आफ्नो असल अंश तिनै व्यक्तिहरूलाई सम्भेको छ जो सन्मार्गमा हिंड्छ र सत्यनिष्ठ छ, जसलाई प्रत्येक विषयमा विश्वास गर्नसकिन्छ, जसको अन्तस्तल र बाहिरी रूप समान छ, वाणी र कर्ममा एकता छ, जो आफ्नो कर्तव्यमार्गमा दृढ र अर्काप्रति आफ्नो धर्म पालन गर्ने उदार हृदयको छ, जो शान्तिपूर्वक बस्छ र अरूलाई बस्नदिन्छ, जसबाट सबैको कल्याणको आशा गरिन्छ र कसैको अमङ्गलको आशङ्का हुँदैन।

यसबाट के थाह पाइन्छ भने मानवीय आचारशास्त्र वास्तवमा ती सार्व-जनिक तथ्य हुन् जसलाई सबैले जानेका बुझेका छन् र अनादि कालदेखि जानेरै आएका छन्। पाप र पुण्य कतैबाट खोजेर निकाल्नुपर्ने गुप्त वस्तु होइन। मान्छे पाप र पुण्यसंग परिचित छ र उसलाई दुवैको ज्ञान नैसर्गिक रूपमा दिइएको छ। यसैले गर्दा पवित्र कुराममा पुण्यलाई 'मअरूफ' (स्वभावमा श्रेष्ठ र ग्राह्य रूपमा ज्ञात) एवं पापलाई 'मुन्कर' (स्वभावमा निकृष्ट र अग्राह्य रूपमा ज्ञात) भनिएको छ। यसको अर्थ हुन्छ, सबैले 'श्रेष्ठ' सम्भेको वस्तु पुण्य हो अनि कुनै 'गुण' अथवा सज्जनताको रूपमा नचिनिने वस्तु पाप हो। अर्को शब्दमा यो वास्तविकतालाई पवित्र कुरानमा यसो भनिएको छ—"ईश्वरले मनुष्यलाई सत् विवेक सहज रूपमा दिएका छन्।"

अब प्रश्न उठछ, यदि आचारको 'गुण' र 'दोष' स्वभावतः ज्ञात छ अनि कति विशेषताहरू श्रेष्ठ र केही निकृष्ट छ भन्ने कुरामा संसार एकमत छ भने आचार सम्बन्धी विशेषताहरू किन भिन्न-भिन्न छन् ? तिनीहरूमा परस्पर अन्तर किन छ ? त्यो कुन वस्तु हो जसको आधारमा हामी भन्नसक्छौं कि 'इस्लाम' मा आचार सम्बन्धी एक स्थायी व्यवस्था छ अनि इस्लामको के त्यस्तो विशिष्ट देन छ जसलाई विचार गर्न योग्य विशेषता भन्नसकिन्छ ?

यो समस्या बुझ्नलाई हामीले ससारका विभिन्न व्यवस्थाहरूमाथि दृष्टि-पात गर्नुपर्छ । यसो गर्दा शुरूमै देखिने अन्तर के हो भने विभिन्न नैतिक गुणलाई जीवनको सामूहिक व्यवस्थामा समेट्दा तिनको सीमा, स्थान र उपयोग निश्चित गर्दा र तिनको उचित अनुपात ठीक गर्दा यी जम्मै व्यवस्थाहरू, परस्पर भिन्न-भिन्न हुन्छन् । गहिरिएर हेर्दा यस्तो अन्तरको कारण बुझिन्छ कि ती व्यवस्थाहरू नैतिक श्रेष्ठता र निकृष्टताको स्तर अनि कल्याण-अकल्याणको ज्ञानको साधन निश्चित गर्न पृथक्-पृथक् छन् । फेरि तो व्यवस्थामा आचार सम्बन्धी नियमहरूमा कुन नियामिका शक्ति छ जसको कारणले ती नियमहरू प्रचलित हुन्छन् तथा कुन प्रेरक शक्ति छ जसले मनुष्य-लाई नैतिक विधि पालन गर्न तयार पार्छ भन्ने कुरोमा पनि मतभेद छ । तर मतभेदका कारणहरूको खोजी गर्दै गएपछि अन्तमा वास्तविकता स्पष्ट हुन्छ । ती जम्मै नैतिक व्यवस्थाहरूको मार्ग अलग गर्ने मूल कारण के हो भने तिनी-हरूमा ब्रह्माण्डको कल्पना, ब्रह्माण्डमा मनुष्यको स्थान र मानवीय जीवनको लक्ष्यको विषयमा विचारभेद छ अनि यही अन्तरले मूलदेखि लिएर हाँगाहरूसम्म, तिनीहरूको आत्मा, मनोवृत्ति र आकृतिलाई एका-अर्कादेखि सर्वथा अलग-अलग गरिदिएको हो । मानव जीवनमा वास्तविक निर्णायक प्रश्न हो, ब्रह्माण्डमा कुनै ईश्वर छन् कि छैनन् ? छन् भने एक छन् कि अनेक ? ईश्वरत्वको गुण के हो ? हामीसंग उनको कस्तो सम्बन्ध छ ? उनले हाम्रो मार्ग-दर्शनको कुनै व्यवस्था गरेका छन् कि छैनन् ? हामी उनको समक्ष उत्तरदायी छौं कि

छैनौं ? उत्तरदायी छौं भने हामीले कुन विषयमा उत्तर दिनुपर्ने हो ? हाम्रो जीवनको लक्ष्य र परिणाम के हो जसलाई अघि राखी हामीले कार्य गर्नुपर्छ ? यो प्रश्नको उत्तर जस्तो किसिमको हुन्छ त्यही अनुसार जीवन व्यवस्था बनिन्छ अनि त्यस अनुसार नै नैतिक नियमहरू पनि बनिन्छन् ।

संसारका विभिन्न जीवन व्यवस्थाको सिंहावलोकन गरेर तीमध्ये कुन कुन व्यवस्थाले माथिका प्रश्नका कस्ता कस्ता उत्तर दिएको छ र त्यो अन्तरको कारणले सो व्यवस्थाको आकृति र मार्गनिर्धारणमाथि कस्तो प्रभाव पारेको छ भनी बयान गर्न यो छोटो भाषणमा मलाई कठिन पर्छ । यसर्थ केवल इस्लामले यी प्रश्नको उत्तर कसरी दिएको छ र यसको आधारमा कस्तो किसिमको नैतिक व्यवस्थाको निर्माण हुन्छ म त्यस विषयमा भन्छु ।

इस्लामको उत्तर के छ भने ब्रह्माण्डमा ईश्वर छन् अनि उनी मात्र एक ईश्वर हुन् । उनी ब्रह्माण्डका पिता हुन्, यसको एक मात्र प्रभु, शासक र पालक हुन् अनि उनकै अनुवर्तनमा यहाँ समस्त क्रियाकलाप भइरहेको छ । उनी सर्वज्ञ, सर्वशक्तिमान एवं प्रत्यक्ष तथा परोक्ष रूपमा सबैसंग अवगत छन् सर्वथा दोषहीन र सम्पूर्ण छन् तथा उनको ईश्वरत्वमा हामी यसरी ओतप्रोत छौं कि कुनै त्यसमा पारस्परिकता छैन । मनुष्य उनको सहज सेवक हो । आफ्नो स्रष्टाको सेवा गर्नु तथा आज्ञा पालन गर्नु उसको कार्य हुन्छ । यो बाहेक उसको जीवनमा अर्को सत्य छैन र उसले जीवनमा पूर्णतया ईश्वरको आज्ञापालन गर्नु पर्छ । यो आज्ञापालनको प्रकृतिको निर्णय गर्ने काम मनुष्यको होइन । यो काम ईश्वरको हो जसको उ सृष्टि र सेवक छ । ईश्वरले उसको मार्गदर्शनको निम्ति सन्देशवाहक पठाएका छन् र ईश्वरीय ग्रन्थहरूको 'दर्शन' गराएका छन् । मनुष्यको कर्तव्य हुन्छ, उपदेशको यही महाश्रोतको धाराको अनुकूल आफ्नो जीवनको व्यवस्थाको निर्माण गर्नु । उ आफ्नो जीवनको सम्पूर्ण कार्य-कलापको विषयमा ईश्वरको समक्ष उत्तरदायी हुन्छ अनि उसले उत्तर दिने काम संसारमा होइन मृत्युपछिको जीवनमा पर्नेछ । वास्तवमा वर्तमान सांसारिक जीवन परीक्षाको समय हो । यहाँ मनुष्यका जम्मै चेष्टाहरू मरणोत्तर

जीवनमा ईश्वरको सामु आफ्नो उत्तरदायित्वको निर्वाह पूर्णतया सफलतापूर्वक गर्नसक्ने उद्देश्य-प्राप्तिको निम्ति केन्द्रीभूत हुनुपर्छ। यो परीक्षामा मनुष्यको सम्पूर्ण अस्तित्व सम्मिलित छ। यो उसको समस्त शक्ति र योग्यताको परीक्षा हो। सम्पूर्ण ब्रह्माण्डमा जुन-जुन वस्तुसंग जे जस्तो सम्बन्ध हुन्छ त्यसमा उसले कस्तो व्यवहार गरेको छ त्यसको निष्पक्ष निरीक्षण हुनेछ। यस्तो निरीक्षण गर्ने सत्ता उनै ईश्वर हुन् जसले जल, वायु, पृथ्वीका रजकणहरू आकाश तरंग अनि मनुष्यको हृदय, मस्तिष्क, हात-पाउ संगसंगै उसको समस्त क्रियाकलापको मात्र होइन तर उसका विचार र सङ्कल्पसम्मको तालिका तयार परेका छन्।

जीवनबारे उठेका मूलभूत प्रश्नमा इस्लामले दिएको उत्तर यो भयो। ब्रह्माण्ड र मनुष्यसंग सम्बन्ध राख्ने यो दृष्टिले त्यस यथार्थ र परम कल्याणलाई निश्चित गर्छ जसलाई पाउनु मनुष्यको प्रयत्नको लक्ष्य हुनुपर्छ अनि त्यो हो ईश्वरको प्रसन्नता। यही त्यो कसौटी हो जसको आधारमा इस्लामको नैतिक व्यवस्थामा कुनै व्यवहार-पद्धतिलाई परख गरी कल्याणकारी छ कि अकल्याणकारी छ भनी निर्णय गरिन्छ। यो पक्का भएपछि नैतिकताको धुरी प्राप्त हुन्छ जसको वरिपरि सम्पूर्ण नैतिक जीवनले फन्को मार्छ। यसको स्थिति लंगुर बिनाको जहाज जस्तो हुँदैन जो हावाको झोंका र समुद्रको छालले चारै दिशामा दगुरिरहन्छ। यसले निश्चय एक केन्द्रीभूत लक्ष्य राखेको हुन्छ। यसकै अनुसार सम्पूर्ण नैतिक गुणको उचित सीमाहरू, स्थान र व्यावहारिक प्रकार निश्चित हुन्छ अनि हामीलाई ती स्थायी नैतिक तत्व (Values) प्राप्त हुन्छन् जो सम्पूर्णतया परिवर्तित स्थितिमा पनि अविचल रहन्छन्। फेरि सबभन्दा ठूलो कुरो छ, हाम्रो परम लक्ष्य 'ईश्वरको प्रसन्नता' हो। यो निश्चित भएपछि चरित्र र नैतिकतालाई एक ठूलो प्राप्ति हुन्छ जसले गर्दा नैतिक विकासका सम्भावनाहरू सीमारहित हुन सक्छन् अनि जस्तोसुकै स्थितिमा पनि स्वार्थप्रियतामा हामी मग्न हुँदैनौं।

कसौटी वा स्तर पक्का भएपछि इस्लामले मानवीय एवं ब्रह्माण्ड सम्बन्धी

दृष्टिद्वारा हामीलाई नैतिक गुण र दोषको ज्ञानको साधन पनि दिन्छ। त्यसले हाम्रो नैतिक ज्ञानलाई केवल बुद्धि, इच्छा, अनुभव अथवा मानवीय विद्याहरूमा आश्रित गरेन जसले गर्दा सधैं परिवर्तित भएका निर्णयबाट हामीले पाएको नैतिकता सम्बन्धी आदेश पनि परिवर्तन भईरहन्छन् र स्थायित्व हुँदैन। तर यसले हामीलाई एक निश्चित ज्ञान श्रोत (ईश्वरीय ग्रन्थ र सन्देशवाहकको आदर्श चरित्र) दिन्छ जसको फलस्वरूप हामी प्रत्येक अवस्था र युगमा नैतिक आदेश पाउँछौं। यी आदेश कस्ता छन् भने यिनले घरेलू जीवनको सानोभन्दा सानो विषयदेखि लिएर अन्तर्राष्ट्रीय राजनीतिको ठूलोभन्दा ठूलो समस्यासम्मका जीवनको प्रत्येक पक्ष र अंगमा हाम्रो मार्गदर्शन गर्छन्। तीभित्र जीवन सम्बन्धी विषयमा नैतिकताका सिद्धान्तहरूको विस्तृत घटना (Widest application) पाइन्छ जसले जस्तोसुकै अवस्थामा ज्ञानको कुनै अरू साधनको आवश्यकताको अनुभव हामीलाई हुन दिँदैन।

फेरि इस्लामको यही ब्रह्माण्ड सम्बन्धी एवं मानवीय दृष्टिकोणमा त्यो नियामिका शक्ति पनि छ जसको खाँचो नैतिक विधिको समर्थनको लागि हुन्छ। त्यो हो ईश्वरको भय, मृत्युपछिको जीवनमा सोधखोजको आशंका र अन्तहीन भविष्य बिग्रने विभीषिका। यद्यपि इस्लामले एउटा यस्तो शक्तिशाली जनमतको निर्माण पनि गर्न चाहन्छ जो सामूहिक जीवनमा शक्ति र समूहको नैतिक सिद्धान्तहरू अनुसार आचारण गर्नलाई विवश गर्ने किसिमको छ तथा एउटा यस्तो राजनैतिक व्यवस्था पनि निर्मित गर्न चाहन्छ जसको सत्ताले नैतिक विधिहरूलाई बलपूर्वक प्रचलित गर्छ। तर यसको वास्तविक विश्वास बाहिरी आतङ्कमा नभएर ईश्वर र मृत्युपछिको जीवनको विश्वासमा निहित भएको आन्तरिक प्रभावमा हुन्छ। नैतिक आदेश दिनभन्दा पहिला इस्लामले मनुष्यको मनमा यस्तो छाप लगाउँछ—तिम्रो सम्बन्ध वस्तुत: ती ईश्वरसंग छ जसले प्रतिक्षण र प्रत्येक ठाउँमा तिमीलाई हेरिरहेको छ। तिमी सम्पूर्ण संसारदेखि लुक्न सक्छौ तर उनीदेखि लुक्न सक्दैनौ। तिमीले जम्मै संसारलाई धोका दिन सकौला तर उनलाई दिन सक्दैनौ। तिमी सम्पूर्ण संसारदेखि भाग्न सक्छौ तर

उनीदेखि भाग्न सक्दैनौ। संसारले तिम्रो केवल प्रत्यक्ष आचरण वा रूपलाई देख्ला तर उनले तिम्रो विचार र संकल्पसम्मलाई देख्छन्। तिमीले छोटो सांसारिक जीवनमा जे चाहन्छौ गर तर एक दिन तिमी मर्नुपर्छ र उनको न्यायालयमा उपस्थित हुनुपर्छ। त्यहाँ वकालत, घूस, सिफारिश, झूटो गवाही, छलकपट कुनैको केही लाग्दैन। त्यहाँ तिम्रो निस्पक्ष निर्णय हुनेछ। ती आदेशको पालन गराउने कुनै पुलिस, अदालत र जेल बाहिर होस् कि नहोस् इस्लामले यो विश्वास उत्पन्न गराएर मानौं प्रत्येक मनुष्यको मनभित्र पुलिसको एक चौकी बसाउँछ। यसले यी आदेशको पालन गराउन उसको अन्तरलाई विवश तुल्याउँछ। इस्लामको नैतिक विधिको पानाहरूमा ती विधिको पालन गराउने वास्तविक शक्ति यही छ। जनमत र शासनको शक्ति उसको पक्षमा भएदेखि ता के थियो र? नत्र यही विश्वासले मात्र मुस्लिम व्यक्ति र मुस्लिम जातिलाई सोझो गरी चलाउन सक्छ। यस्तो अवस्थामा विश्वास वस्तुतः हृदयमा बद्धवरिकर हुन आवश्यक छ।

ब्रह्माण्ड र मानवको सम्बन्धमा इस्लाममा कतिपय प्रेरणाहरू पनि पाइन्छन् जसले मनुष्यलाई नैतिक विधि अनुसार आचरण गर्न अनुप्राणित गर्छन्। मनुष्यले ईश्वरलाई आफ्नो ईश्वर मान्नु, उसको आज्ञा पालन गर्नु नै जीवन मापनको ढंग हो अनि ईश्वरको प्रसन्नतालाई आफ्नो जीवनको लक्ष्य ठान्नु जस्ता कुराहरू केको निम्ति पर्याप्त प्रेरणा हो भने मनुष्यले ती आदेशको अनुवर्तन गरोस् जो ईश्वरीय आदेश हुन्। यो प्रेरणाको साथ साथ मृत्युपछिको जीवन सम्बन्धी विश्वास पनि एक प्रबल प्रेरणा हुन्छ। जुन व्यक्ति ईश्वरीय आदेश अनुसार आचारण गर्छ उसको लागि शाश्वत जीवनमा एक उज्ज्वल भविष्य असन्दिग्ध हुन्छ। यो सांसारिक अस्थायी जीवनमा उसले जति नै कठिनाइ, हानि र कष्टको सामना गर्न पनि त्यहाँको जीवन निश्चय उज्ज्वल हुन्छ। यसको विपरीत जो यहाँ बाट ईश्वरीय आज्ञाको विरुद्ध आचरण गरेर जान्छ उसले यहाँको क्षणिक सांसारिक जीवनमा जति सुखभोग गरे पनि त्यहाँ स्थायी दण्ड भोग्नुपर्छ। त्यो आशा र यो भय कसैको मनमा उत्पन्न भए

त्यसबाट यति प्रबल प्रेरणा पाइन्छ कि यदि मान्छेलाई सन्मार्गको अवलम्बनको फल संसारमा असाधारण हानि हुन लागे पनि उसलाई सन्मार्गतर्फ अग्रसर गराउँछ अनि त्यस्ता अवसरमा पनि उसलाई कुमार्गबाट टाढ़ो राख्छ जब दुष्कर्म अत्यन्त आनन्दमय र लाभदायक लाग्छ।

माथिको विवरणबाट स्पष्ट हुन्छ, इस्लामको ब्रह्माण्ड सम्बन्धी दृष्टि पाप-पुण्यको कसौटी, नैतिक ज्ञानको श्रोत, नियामिका शक्ति र प्रेरक तत्व सबै पृथक् छन्। यिनै वस्तुद्वारा यसले स्वयंसिद्ध नैतिक सद्‌गुणहरूलाई आफैले निश्चित गरेको मूल्य (Value) अनुसार क्रमबद्ध गरी जीवनको समस्त अङ्गमा प्रचलित गर्छ। यसकै आधारमा के भन्नु यथार्थ हुन्छ भने इस्लाममा एउटा परिपूर्ण, स्थायी र स्वयं शाश्वत व्यवस्था छ। यो व्यवस्थाको विचारणीय व्यवस्थाहरू धेरै भए पनि तीनवटा अत्यधिक स्पष्ट छन् जसलाई इस्लामको विशिष्ट देन भन्न सकिन्छ।

पहिलो विशेषता के हो भने इस्लामले ईश्वरको प्रसन्नतालाई लक्ष्य बनाएर चरित्रयको निम्ति एउटा यस्तो उच्च नैतिक स्तर प्रस्तुत गर्छ जसको फलस्वरूप नैतिक विकासको कुनै सीमा रहँदैन। ज्ञानको एउटा श्रोत निश्चित गरेपछि यसले नैतिकतामा स्थिरता र स्थायित्व उत्पन्न गर्छ। यसमा विकासको लागि ता अवकाश हुन्छ नै तर अस्थिरता र विविधताको लागि कुनै स्थान छैन। ईश्वर भयद्वारा यसले चरित्रलाई नियामिका शक्ति प्रदान गर्छ जसले बाहिरी प्रभाव बिना नै मनुष्यलाई यसको पालन गर्न लाउँछ। फेरि, ईश्वर र मरणोत्तर जीवनको विश्वास द्वारा यसले प्रेरणा दिन्छ र यसले मनुष्यमा आफै नैतिक विधि अनुसार आचरण गर्ने रूचि र तत्परता उत्पन्न गराउँछ।

दोस्रो व्यवस्था के छ भने इस्लामले आफ्नो व्यर्थ उपजको उपयोग गरी कुनै असल आचरशास्त्र प्रस्तुत गर्दैन, नता मनुष्यको स्वयंसिद्ध नैतिक कार्यहरू-बाट केही घटाउने वा बढ़ाउने प्रयत्न गर्छ। यसले स्वयंसिद्ध र सुप्रसिद्ध समस्त नैतिक गुणहरूलाई ग्रहण गर्छ अनि जीवनमा पूर्ण सन्तुलन र सापेक्ष अनुपात-

संग एक अवसर, स्थान र उपयोग निश्चित गर्छ अनि तिनीहरूलाई यति विस्तृत ढंगमा घटित गर्छ कि व्यक्तिगत व्यवहार, घरेलू रहन-सहन, नागरिक जीवन राष्ट्र सम्बन्धी राजनीति, जीविका सम्बन्धी कार्य, मण्डी, हाट, शिक्षणालय, न्यायालय, पुलिस लाईन, छाउनी, रणक्षेत्र सन्धिसम्मेलन – तात्पर्य के भने आचारको सर्वव्यापी प्रभावबाट मुक्त हुने जीवनको कुनै पक्ष वा अंग बाँकी रहँदैन। प्रत्येक स्थानमा, जीवनको प्रत्येक अंगमा यसले आचारलाई शासक बनाउँछ। अनि जीवन-सम्बन्धी समस्याहरूको सूत्रधार स्वार्थपूर्ण नीति होइन विशुद्ध आचार यसको लक्ष्य हुन्छ।

तेस्रो विशेषता के हो भने इस्लामले मनुष्यसंग एउटा यस्तो व्यवस्थाको मांग गर्छ जो स्वयंसिद्ध नैतिक तत्वहरूमाथि आधारित होस र जसमा निषिद्ध तत्व नहोस्। इस्लामको भनाइ के छ भने मानवको आत्माले सधैं असल मानेको भलाइहरूको निम्ति आऊ, मार्ग फराक पारौं अनि मानवताले जुन हानिकारक कुराहरूलाई नराम्रो ठानेको छ तिनको दमन र बिनाश गरौं। यो भनाइलाई स्वीकार गर्नेहरूलाई जम्मा गरेर इस्लामले एउटा समुदायको निर्माण गर्‍यो र यसको नाम 'मुस्लिम' भयो। यिनीहरूलाई एक समुदायमा ल्याउनुको तात्पर्य के थियो भने तिनीहरूले स्वयंसिद्ध सहज नैतिक गुणहरूलाई प्रचलित र स्थापित गरून् अनि निषिद्ध एवं त्याज्य अनैतिकताको दमन र विनाशको लागि संघटित प्रयत्न गरून्। अब यदि यो समुदायबाट सहज नैतिक गुणहरूको दमन र अनैतिकताको स्थापना हुनलाग्यो भने समुदाय र संसार दुवैको लागि खेदजनक स्थिति उत्पन्न हुनेछ।

# इस्लामको राजनैतिक व्यवस्था

इस्लामीय राजनैतिक व्यस्वथा तीनवटा सिद्धान्तको आधारमा अडिएको छ—एकेश्वरवाद, ईश्वरदूतत्व र ईश्वरप्रतिनिधित्व। यी सिद्धान्तहरूको पूर्ण ज्ञान नभई इस्लामीय राजनीतिको विस्तृत व्यवस्थालाई बुझ्न कठिन पर्छ। यसकारण म सर्वप्रथम यिनीहरूको संक्षिप्त व्याख्या गर्नेछु।

एकेश्वरवादको अर्थ के हुन्छ भने यो संसार र यसमा वास गर्नेहरूका स्रष्टा, पालक एवं स्वामी ईश्वर हुन्। यहां उनको राज्य र शासन चल्छ अनि उनलाई आज्ञा दिने र निषेध गर्ने अधिकार छ। हामीले उनको आज्ञाको पालन र उनकै अनुशरण गर्नुपर्छ। हाम्रो यो अस्तित्व जसको कारणले हामी विद्यामान छौं, हाम्रा यी इन्द्रिय र शक्ति जसद्वारा हामी काम लिन्छौं, हाम्रा ती अधिकार जो हामीलाई सांसारिक वस्तुमाथि प्राप्त छ तथा स्वयं त्यो सांसारिक वस्तु जसमाथि हामी आफ्ना अधिकारहरूको उपयोग गर्छौं—यीमध्ये कुनै वस्तु न हामीले उत्पन्न गरेका हौं न ता प्राप्त नै गरेका हौं। ईश्वरबाहेक अरू कुनै शक्तिले हामीलाई यी वस्तुहरू ईश्वरसंग साझे भई दिएको होइन। यसर्थ आफ्नो अस्तित्वको प्रयोजन, आफ्नो शक्ति र अधिकारको सीमा निश्चित गर्ने काम न हाम्रो हो न अरू कसैलाई यसमा हस्तक्षेप गर्ने अधिकार छ। यो कार्य केवल उनै ईश्वरको हो जसले हामीलाई यस्ता शक्ति र अधिकारसंग जन्म दिए अनि हाम्रो उपकारको लागि यस्ता अनेक सांसारिक वस्तु दिए। एकेश्वरवादको यो सिद्धान्तले शुरूदेखि नै मानवीय प्रभुत्वको निषेध गर्छ। एक व्यक्ति होस् वा एक परिवार, एक वर्ग होस् वा एक सम्प्रदाय, एउटा सम्पूर्ण जाति होस् वा सामूहिक रूपमा सम्पूर्ण संसारका मनुष्य—कसैले कुनै अवस्थामा पनि प्रभुत्वको अधिकार पाउँदैन। शासक ईश्वर मात्र छन् अनि उनको आदेश विधि (कानून) हुन्छ।

जुन साधनद्वारा ईश्वरीय विधि मनुष्यसम्म पुग्छ त्यसलाई 'ईश्वरदूतत्व' भनिन्छ। यस साधनबाट दुइवटा चीज पाइन्छ। एउटा हो 'ग्रन्थ' जसमा ईश्वर आफैले आफ्ना विधिको वर्णन गरेका छन्। अर्को हो ग्रन्थको प्रामाणिक व्याख्या जसमा ईश्वरीय सन्देशवाहक ईश्वरको प्रतिनिधि भई आफ्नो वाणी र व्यवहारद्वारा गरेका सम्पूर्ण सिद्धान्तहरूको वर्णन पाइन्छ। यिनै सिद्धान्त अनुसार मानवीय जीवन–व्यवस्थाको स्थापना हुनुपर्छ। सन्देशवाहकले ग्रन्थको यो आशय अनुसार व्यावहारिक रूपमा जीवन व्यवस्थाको निर्माण गरी, त्यसलाई चलाएर, त्यसको विषयमा आवश्यक विवरण दिएर हाम्रो निम्ति एक आदर्श स्थापित गरेका छन्। इस्लामी परिभाषामा यिनै दुइ वस्तुको सम्मिश्रणको नाम 'शरीअत' हो। यही मूलभूत विधान अनुसार इस्लामी राज्य स्थापित हुन्छ।

अब 'खिलाफत' लाई लिऊँ। अरबी भाषामा यो शब्द प्रतिनिधित्वको निम्ति प्रयोग हुन्छ। इस्लामी दृष्टिकोण अनुसार संसारमा मनुष्य ईश्वरको प्रतिनिधि हो। अर्थात् मनुष्यले उनको राज्यमा उनले दिएका अधिकारहरूको उपयोग गर्छ। तपाईले आफ्नो सम्पत्तिको प्रबन्ध कसैलाई समर्पित गर्दा अनिवार्य रूपमा चारवटा शर्तहरू राख्नुहुन्छ। पहिलो, सम्पत्तिको वास्तविक मालिक त्यो व्यक्ति हैन तपाई स्वयं हुनुहुनेछ। दोस्रो, सम्पत्तिको विषयमा तपाईले दिएको आदेश अनुसार उसले काम गर्नुपर्नेछ। तेस्रो, तपाईले तोकि-दिएको सीमाभित्र उसले आफ्ना अधिकारहरूको उपयोग गर्नुपर्नेछ। चौथो, उसले तपाईको सम्पत्तिमा तपाईको इच्छा पूर्ण गर्नुपर्नेछ, उसको आफ्नो होइन। यी चार शर्त प्रतिनिधित्वमा पनि यसरी सम्मिलित छन् कि 'प्रतिनिधि' शब्द उच्चारण गर्नेसाथ यिनको सम्झना हुन्छ। कुनै प्रतिनिधिले यी चारवटा शर्तलाई पूरा नगरे तपाई भन्नुहुन्छ उसले प्रतिनिधित्वको सीमाको उल्लंघन गर्‍यो अनि त्यो मर्यादालाई भंग गर्‍यो जसको भाव प्रतिनिधित्वको प्राण हो। वस्तुतः यही अर्थमा इस्लामले मनुष्यलाई ईश्वरको प्रतिनिधि मानेको छ अनि यही प्रतिनिधित्वको कल्पनामा यी चार कुरा सम्मिलित छन्। यस्तो राज-

नैतिक दृष्टिकोण अनुसार निर्माण भएको राज्य यथार्थमा ईश्वरीय शासनको अधीनको मानवीय प्रतिनिधित्व हुन्छ। मानव प्रतिनिधिले ईश्वरीय राज्यमा उनको आदेश अनुसार, उनले निश्चित गरेका मर्यादाभित्र काम गरी उनकै इच्छा पूर्ण गर्नुपर्छ।

'खिलाफत' अर्थात् प्रतिनिधित्वको यो व्याख्याको बारेमा याद राख्नुपर्ने अवअर्को कुरा के छ भने इस्लामीय दृष्टि अनुसार प्रतिनिधित्वको तात्पर्य कुनै एक विशिष्ट व्यक्ति, वंश वा वर्गलाई 'प्रतिनिधि' (खलीफा) निश्चित गर्नु होइन तर एकेश्वरवाद र ईशदूतत्वका आधारभूत सिद्धान्तहरू स्वीकार गरी प्रतिनिधित्वका शर्तहरूलाई पूर्ण गर्न तत्पर सम्पूर्ण मुस्लिम समाजलाई प्रतिनिधित्वको पद समर्पित गर्नु हो। यस्तो समाजले सामूहिक रूपमा प्रतिनिधित्वलाई धारण गर्छ अनि त्यसको प्रत्येक व्यक्ति वा घटकमा यो प्रतिनिधित्व पुग्छ। इस्लाममा लोकतन्त्रको आरम्भ यहीं हुन्छ। इस्लामीय समाजमा प्रत्येक व्यक्तिलाई प्रतिनिधित्वको स्वत्व एवं अधिकार प्राप्त छ। सबैले ती स्वत्व तथा अधिकारहरूको समान हिस्सा पाउँछन्, कोही अरूभन्दा उच्च हुँदैन र कसैलाई अरूको स्वत्व र अधिकारहरूको हनन गर्ने अधिकार छैन। राज्यको शासन र प्रबन्ध चलाउनको निम्ति जुन शासनको निर्माण हुन्छ त्यो तिनै व्यक्तिहरूको इच्छाले हुन्छ जसले लोक प्रतिनिधित्व सम्बन्धी आफ्ना अधिकारहरूको एक अंश शासनलाई सुम्पन्छन्। शासनको निर्माणमा तिनीहरूको मत विचारणीय हुन्छ र तिनीहरूको सम्मतिद्वारा मात्र शासन-कार्यको संचालन हुन्छ। तिनीहरूको विश्वास प्राप्त गरेको व्यक्तिले तिनीहरूको तर्फबाट प्रतिनिधित्व सम्बन्धी कार्यको सम्पादन गर्छ अनि जसले तिनीहरूको विश्वास हराउँछ उसले शासकको पदलाई त्याग गर्नुपर्छ। यो दृष्टिले इस्लामीय जनतन्त्र एक पूर्ण लोकतन्त्र हो र कुनै पनि लोकतन्त्र जत्तिकै यो पूर्ण हुनसक्छ। इस्लामीय लोकतन्त्रलाई पश्चिमी लोकतन्त्रबाट फरक पार्ने एउटा कारण छ। पाश्चात्य दृष्टिकोण अनुसार 'प्रजातन्त्रीय प्रभुत्व' मान्य हुन्छ तर इस्लामले 'प्रजातन्त्रीय प्रतिनिधित्वलाई मान्छ। त्यहां प्रजा स्वयं शासक

हुन्छ तर यहाँ शासक ईश्वर हुन्छन् अनि प्रजाचाहिं उनको प्रतिनिधि । त्यहाँ जनताले नै आफ्ना विधि र आचारको निर्माण गर्छ, यहां ईश्वरले आफ्ना सन्देशवाहक द्वारा दिएका इस्लामीय निधि (शरीअत) को पालन गर्नुपर्छ । त्यहां शासनको कार्यहुन्छ जनताको इच्छालाई पूर्ण गर्नु, यहाँ शासन र त्यसको निर्माण गर्ने जनताको कार्य हुन्छ ईश्वरीय इच्छालाई पूर्ण गर्नु । संक्षेपमा के भन्न सकिन्छ भने पाश्चात्य प्रजातन्त्र सर्वथा एक बन्धनहीन प्रभुत्व हो जसले आफ्ना अधिकारहरूको प्रयोग स्वतन्त्रतापूर्वक गर्छ । यसको विपरीत इस्लामीय प्रजातन्त्र एक ईश्वरीय विधि-नियन्त्रित भक्तिमय जीवन हो जसले आफ्ना अधिकारहरूको प्रयोग ईश्वरीय आदेश अनुसार निश्चित भएको सीमाभित्र गर्छ । अब म तपाईंहरूलाई यस राज्यको संक्षिप्त तर स्पष्ट रूपरेखा प्रस्तुत गर्नेछु जसको निर्माण एकेश्वरवाद, ईशदूतत्व र ईश्वरीय प्रतिनिधित्वको आधारमा हुन्छ ।

कुरानमा यस राज्यको प्रयोजनबारे यसरी स्पष्ट बताइएको छ—ईश्वरले मानव जीवनलाई सद्गुणहरूद्वारा शोभित भएको देख्न चाहन्छन् र राज्यले पनि त्यस्ता सद्गुणहरूको स्थापना, विकास र वृद्धि गर्नुपर्छ । फेरि राज्यले ईश्वरलाई अप्रिय लाग्ने दुर्गुणहरूलाई रोक्नुपर्छ, मेटाउनुपर्छ र दमन गर्नुपर्छ । इस्लाममा राज्यको प्रयोजन केवल देशको शासन प्रबन्धको लागि होइन र कुनै जातिको सामूहिक इच्छाहरूको पूर्तिको लागि पनि होइन । यसको विपरीत इस्लामले राज्यको सम्मुख एक यस्तो उच्चतम लक्ष्य राखिदिन्छ जसको प्राप्तिको निम्ति राज्यले आफ्नो समस्त साधन, उपकरण र शक्तिको उपयोग गर्नुपर्छ । यसको अर्थ के हुन्छ भने ईश्वरले आफ्ना सृष्टिका प्राणीहरूको जीवनमा देख्न चाहेका पवित्रता, सौन्दर्य, मंगल, उत्कर्ष एवं कल्याण प्रकट हुनुपर्छ अनि उनका दृष्टिमा सृष्टिलाई उजाड़ पार्ने र प्राणीहरूको जीवनलाई विकृत पार्ने अवनति र अपकर्षका समस्त प्रकारहरूको प्रतिकार हुनुपर्छ । यस लक्ष्यलाई प्रस्तुत गर्नेसाथ हाम्रो सामु पाप र पुण्य अथवा कल्याण र अकल्याण दुवैको स्पष्ट चित्र खड़ा हुन्छ जसमा अभीष्ट सद्गुण

र अनिष्ट दुर्गुणहरूलाई स्पष्टसंग प्रदर्शित गरिदिएको छ। इस्लामी राज्यले यो चित्रलाई सामु राखेर प्रत्येक युग र परिस्थितिमा आफ्नो सुधारात्मक कार्यक्रमको निर्माण गर्नसक्छ।

जीवनको प्रत्येक अंगमा नैतिक सिद्धान्तहरूको पालन गरियोस् भन्ने इस्लामको स्थायी उद्देश्य हुन्छ। यसकारण निष्पक्ष न्याय, निस्वार्थ सत्य र शुद्ध सन्मार्गको अवलम्बनमाथि राजनीति आश्रित होस् भन्ने ध्येयले एक मात्र निश्चित नीति इस्लामले आफ्नो राज्यको लागि निर्धारण गर्छ। इस्लामले राष्ट्रीय शासन सम्बन्धी अथवा जातीय स्वार्थको निम्ति मिथ्या भाषण, कपट आचरण र अन्याय कदापि सहँदैन। यसले देशभित्रका शासक र शासितबीच असल सम्बन्ध स्थापित गर्न चाहन्छ र देशबाहिरका अन्य जातिसंग सम्बन्ध राख्न चाहन्छ। देशभित्र वा बाहिर स्वार्थ र हितलाई भन्दा सत्य, विश्वसनीयता र निष्पक्षतामा जोड़ दिन्छ। मुस्लिम व्यक्तिलाई झैं मुस्लिम राज्यबारे यसको भनाइ छ – प्रतिज्ञालाई पूर्ण गर, लेनदेनको मानदण्ड एउटै राख, जे भन्छौ त्यही गर र जो गर्छौ त्यही भन, आफ्नो अधिकार संग-संगै कर्त्तव्यको पनि ख्याल राख, अर्काको कर्त्तव्यसंगसंगै उसको अधिकारलाई पनि नलत्याऊ अनि अत्याचारलाई होइन शक्तिलाई न्याय-स्थापनाको साधन बनाऊ। आफ्नो अरूप्रतिको कर्त्तव्यलाई आफ्नै कर्त्तव्य ठान अनि अरूको ऋणबाट मुक्त होऊ। सत्ता एवं अधिकारलाई ईश्वरको धरौटी सम्झ अनि त्यो धरौटीको पूर्ण लेखा-जोखा तिमीले ईश्वरलाई दिनुपर्छ भन्ने विश्वास लिएर सत्ता र अधिकारको उपयोग गर।

इस्लामी राज्यको स्थापना पृथ्वीको कुनै विशिष्ट भाग अथवा क्षेत्रमा भए तापनि यसले न ता मानवीय अधिकारलाई एउटा भौगोलिक सीमाभित्र सीमित राख्छ न ता नागरिकतालाई। मनुष्यताको सम्बन्धको विषयमा इस्लामले प्रत्येक व्यक्तिको निम्ति केही आधारभूत अधिकारहरू निश्चित गर्छ अनि कुनै मनुष्य इस्लामीय शासनको सीमाभित्र रहोस् कि बाहिर, मित्र होस् कि शत्रु, उसंग सन्धि होस् कि युद्ध भइरहेको होस्—जुनसुकै अवस्थामा

पनि ती अधिकारहरूको सम्मान गर्न आज्ञा दिन्छ। मानवीय रक्त प्रत्येक अवस्थामा सम्माननीय हुन्छ र यसलाई धर्मकार्यमा बाहेक अरू कुनै कारणमा बहाउनु हुँदैन। कुनै अवस्थामा पनि नारी, वृद्ध बालक, रोगी र घाइतेमाथि हात उठाउनु उचित होइन। नारीको सतीत्व जुनसुकै अवस्थामा सम्माननीय हुन्छ अनि नारीको अपमान हुनुहुंदैन। शत्रुसंगै मिलेको होस् तर भोकोले खानेकुरो, नाङ्गोले वस्त्र अनि रोगी वा घाइतेले उपचार र चिकित्सा पाउनुपर्छ। इस्लामले यी र यस्तै किसिमका अधिकारहरू, मानवलाई मानव भएकै नाताले दिएको छ अनि यी अधिकारहरूलाई इस्लामीय राज्यको विधानमा मूल अधिकार मानिन्छन्। अब रह्यो नागरिकताको अधिकार। इस्लामले यस्ता अधिकार आफ्नो राज्यको सीमाभित्र जन्म लिनेलाई मात्र प्रदान गर्ने होइन तर संसारको कुनै भागमा जन्म लिने प्रत्येक मुसलमान इस्लामीय राज्यको सीमाभित्र प्रवेश गर्नेसाथ यसको नागरिक हुन्छ अनि यो राज्यका अन्य जन्मजात नागरिकले पाउने अधिकार उसले पनि पाउँछ। संसारभित्र भएका जम्मै इस्लामीय राज्यमा नागरिकता सम्मिलित रूपमा हुन्छ। इस्लामीय राज्यभित्र मुसलमानलाई प्रवेश गर्नको निम्ति प्रवेशपत्रको आवश्यकता पर्दैन। कुनै पारिवारिक, जातीय अथवा वर्गीय विशिष्टताबिना प्रत्येक इस्लामीय राज्यमा मुसलमान ठूलोभन्दा ठूलो उत्तरदायित्वपूर्ण पदमा नियुक्त हुनसक्छ।

इस्लामीय राज्यभित्र बस्ने अमुस्लिमको लागि इस्लामले केही अधिकारहरू निश्चित गरिदिएको छ अनि ती अनिवार्यत: इस्लामीय विधानका अंश हुन्छन्। इस्लामीय परिभाषामा यस्ता अमुस्लिमलाई 'जिम्मी' (रक्षित) भनिन्छ अर्थात् जसको रक्षाको 'जिम्मा' (उत्तरदायित्व) इस्लामी राज्यले लिएको हुन्छ। रक्षितहरूको धन, जीवन र सम्मान मुस्लमानको धन, जीवन र सम्मानको समान आदरणीय हुन्छ। फौजदारी दिवानी कानूनमा कुनै अन्तर हुँदैन। रक्षितहरूको धर्मसम्बन्धी विधिमा इस्लामी राज्यले कुनै हस्तक्षेप गर्दैन। उनीहरूले आफ्नो विचार, विश्वास, रीतिनीति र धार्मिक प्रवा-

हरूको पालन गर्न पूर्ण स्वतन्त्रता पाउँछन् । रक्षितले आफ्नो धर्मको प्रचार मात्र होइन तर विधिको मर्यादाभित्र रहेर इस्लामको आलोचनासम्म गर्न-सक्छ । यी र यी जस्तै अधिकार पनि इस्लामीय विधानमा अमुस्लिम प्रजा-लाई दिइएको छ । यी अधिकार स्थायी हुन् र उनीहरूले आफूलाई इस्लामीय राज्यले लिएको उत्तरदायित्वदेखि मुक्त नगरेसम्म यी अधिकार खोस्न सकिँदैन । कुनै अमुस्लिम राज्यले आफ्ना मुस्लिम प्रजामाथि जतिसुकै अत्याचार गरोस् तर त्यसको बदला लिने रूपमा एउटा इस्लामीय राज्यले आफ्ना अमुस्लिम प्रजालाई 'शरीअत' को विरुद्ध लेश मात्र दुर्व्यवहार गरे अवैध ठहरिन्छ । कतिसम्म भने, हाम्रो सीमाको बाहिर जम्मै मुसलमानको वध गरिए पनि हामी आफ्नो सीमाभित्र अन्यायपूर्वक एउटै रक्षितलाई वध गर्न सक्दैनौं ।

इस्लामीय राज्य-प्रबन्धको उत्तरदायित्व एक 'अमीर' (प्रधान) लाई दिइन्छ । 'अमीर' लाई प्रजातन्त्रीय प्रधानको समान सम्झनुपर्छ । उसको निर्वाचनको निम्ति विधानका सिद्धान्तहरू मान्ने जम्मै वयस्क स्त्री-पुरुषले मतदान दिने अधिकार पाउँछन् । निर्वाचनको आधार हुन्छ इस्लामको तत्वसंग परिचय, इस्लामी चारित्र्य ईश्वरको भय एवं राजनीतिज्ञताको दृष्टिले कुन व्यक्तिमा समाजका बेसीभन्दा बेसी मानिसहरूको विश्वास छ । यस्तो व्यक्ति-लाई प्रधानको पदमा निर्वाचित गरिन्छ । उसको सहायताको लागि एक सल्लाहकार समिति बनाइन्छ जसको निर्वाचन पनि मानिसहरू द्वारा नै हुन्छ । देशको शासन 'अमीर' ले सल्लाहकार समितिको सम्मति लिएर गर्नुपर्छ । आफू-माथि मानिसको विश्वास रहुन्जेलसम्म उसले शासन चलाउनसक्छ । विश्वास हराएपछि उसले पदत्याग गर्नुपर्नेछ । मानिसहरूको दृष्टिमा विश्वासनीय रहेसम्म उसलाई सम्पूर्ण शासनको अधिकार प्राप्त हुन्छ अनि उसले सल्लाह-कारहरूको बहुमतको विरुद्ध आफ्नो विशेषाधिकारको प्रयोग पनि गर्नुसक्छ । जनसाधारणलाई 'अमीर' र उसको शासनको आलोचना गर्ने पूर्ण अधिकार हुन्छ ।

'शरीअत' मा निश्चित गरिएको सीमाभित्र इस्लामीय राज्यको विधि-निर्माण हुन्छ। ईश्वर र उनको सन्देशवाहकको स्पष्ट आदेश अनुवर्तनको लागि हुन्। कुनै विधान परिषद् अथवा व्यवस्थापिका सभाले यसलाई परिवर्त्तन गर्न सक्दैन। यदि दुइ वा दुइमन्दा बेसी तात्पर्य निस्कने आदेश भए 'शरीअत'—को ज्ञान भएका मानिसहरूको काम हुन्छ त्यस्ता आदेशको आशय बुझ्नु। यस-कारण त्यस्ता विषयको जिम्मा सल्लाहकार समितिको त्यो उपसमितिलाई दिनुपर्छ जसमा ती विषयका विद्वान् हुन्छन्। योबाहेक 'शरीअत' को कुनै आदेश नभएको विषयहरूको एक विस्तृत क्षेत्र छ। यस्ता सम्पूर्ण विषयमा स्वयं सल्लाहकार समितिले विधि-निर्माण गर्नसक्छ।

इस्लाममा शासन-प्रबन्धको अधीनमा न्यायालय हुँदैन तर यो ईश्वरको साक्षात् प्रतिनिधि र उनकै सम्मुख उत्तरदायी हुन्छ। न्यायालयका अधिकारी-हरूको नियुक्ति ता शासनले नै गर्छ तर एक व्यक्ति न्यायाधीशको आसनमा बसेपछि उसले ईश्वरीय विधि अनुसार निष्पक्ष न्याय गर्नुपर्छ अनि उसको न्यायको सीमादेखि बाहिर शासन पनि जानुहुँदैन। कहाँसम्म भने, उसको सामु शासनको प्रधानसम्मले वादी अथवा प्रतिवादीको रूपमा एक साधारण नागरिक जस्तै उपस्थित हुनुपर्नेछ।

# इस्लामको सामाजिक व्यवस्था

संसारका जम्मै मनुष्य एउटै परिवारका हुन् भन्ने दृष्टिकोण इस्लामीय सामाजिक व्यवस्थाको आधारशीला हो । ईश्वरले सर्वप्रथम एक मानव दम्पति उत्पन्न गरेका थिए । त्यही दम्पतिबाट जम्मै मनुष्य उत्पन्न भए र आज संसारभरि फैलिएका छन् । शुरूमा केही कालसम्म यो दम्पतिका सन्तान एउटै समुदायमा सीमित थिए । तिनीहरूको धर्म एउटै थियो, भाषा एउटै थियो । तिनीहरूमा कुनै पारस्परिक भेद थिएन । तथापि जति-जति जनसंख्या बढ्दै गयो त्यति त्यति तिनीहरू पृथ्वीमा फैलिन लागे अनि यो विस्तारको फलस्वरूप तिनीहरू प्राकृतिक तौरमा विभिन्न जाति, प्रजाति र परिवारमा छुट्टिए । तिनीहरूको भाषा अलग अलग भयो । तिनीहरूको देश पनि पृथक् भयो, रहन-सहनमा विभिन्नता आयो र स्थान-स्थानको जलवायुले तिनीहरूको रूप-रग र आकृतिसम्ममा परिवर्त्तन गरिदियो । यी सब विभिन्नता प्राकृतिक हुन् जो संसारमा विद्यमान छन् । यसकारण, यिनीहरूलाई इस्लामले वास्तविक घटनाको रूपमा स्वीकार गर्छ । इस्लामले यिनीहरूलाई मेटाउन चाहँदैन, बरू मनुष्यहरूको वास्तविक परिचय र सहयोग यस्तै ढंगले सम्भव हुन्छ भनी यसलाई लाभदायक ठान्छ । तर यस्ता विभिन्नताको आधारमा मानिसहरूमाफ जुन प्रजातीय, वर्णसम्बन्धी. भाषासम्बन्धी, जातीय अनि देशीय पक्षपात उत्पन्न भएको छ त्यसलाई इस्लामले अनुचित मान्छ । मनुष्यमा सानो-ठूलो, श्रेष्ठ-निकृष्ट तथा स्वकीय-परकीय अथवा जाति भेदभाव जन्मको आधारमा गरिएको छ । इस्लामीय दृष्टिकोण अनुसार ती सब अज्ञानमूलक हुन् । इस्लामले संसारका सम्पूर्ण मनुष्यलाई भन्छ—तिमीहरू सबै एउटै माता-पिताका सन्तान हौ यसर्थ एका-अर्काका दाज्यू-भाइ हौ अनि मनुष्यको नाताले परस्पर समान छौ ।

मानवताको यो नातालाई प्रस्तुत गरेपछि इस्लामले भनेको छ, यदि मान्छे-

मान्छेमा कुनै वास्तविक अन्तर हुनसक्छ भने त्यो अन्तर प्रजाति, वर्ण, देश र भाषामा हुँदैन तर विचार, स्वभाव र सिद्धान्तमा हुनसक्छ। एउटी आमाका दुइ छोराहरू वंश अर्थात् पितृपरम्परको दृष्टिले एकै हुनसक्लान् तर दुवैको विचार र चरित्र भिन्न-भिन्न भए उनीहरूको मार्ग अलग हुन्छ। यसको विपरीत सुदूरपूर्व अनि सुदूरपश्चिम बस्ने दुइ व्यक्ति प्रत्यक्ष रूपमा एका-अर्कादेखि जतिसुकै टाढ़ा रहुन् तर उनीहरूको विचार समान भए र जीवनको चरित्र एकै प्रकारको भए जीवनको मार्ग एउटै हुन्छ। यो दृष्टिकोणबाट हेर्दा इस्लामले संसारका सम्पूर्ण प्रजातीय, देशीय एवं जातीय समाजहरूको विरुद्ध एक विचार-प्रधान, सिद्धान्तप्रिय एवं चरित्रवान् समाजको निर्माण गर्छ। यस्ता समाजमा सम्पूर्ण मानवजातिको सम्बन्धको आधार उनीहरूको जन्म नभएर एक विश्वास र एक नैतिक विधान हुन्छ। ईश्वरलाई आफ्ना स्वामी र उपास्य मान्ने अनि सन्देशवाहकहरूद्वारा ल्याइएका आदेशलाई आफ्नो जीवन-व्यवस्था ठान्ने प्रत्येक व्यक्ति यो समाजमा सम्मिलित हुनसक्छ। अफ्रिका-निवासी होस् कि अमेरिकाको सिमेटिक वंशको होस् वा आर्य जातिको होस्, कालो होस् कि गोरो, हिन्दी बोलोस् कि अरबी जो पनि यो समाजमा सम्मिलित हुनसक्छ अनि यहाँ सबैको अधिकार र सामाजिक स्थिति समान हुन्छ। उनीहरूमाभ कुनै किसिमको प्रजातीय, जातीय अथवा वर्गीय अन्तर हुँदैन कोही ठूलो र कोही सानो हुँदैन, छुवाछुत हुँदैन, कसैले छुँदा कोही अपवित्र हुँदैन, विवाह-सम्बन्ध, खाने-पिउने र पारस्परिक हेलमेलमा बाधा हुँदैन अनि कोही पनि जन्म अथवा व्यवसायको दृष्टिले नीच अथवा निकृष्ट हुँदैन। यो समाजमा जाति वा वंशको आधारमा कसैले विशेष अधिकार पाउँदैन। मनुष्यको श्रेष्ठताको आधार उसको वंश वा धन हुँदैन तर श्रेष्ठताको आधार हुन्छ अरूको अपेक्षा अधिक चरित्रवान् भई ईश्वरको डर राखेर आफ्नो कर्म गर्नु।

यो यस्तो समाज हो जो प्रजाति, वर्ण र वाणीको सीमा साथसाथै भौगोलिक सीमालाई भत्काएर पृथ्वीको समस्त भागामा फैलिन सक्छ अनि यसको आधारमा मनुष्य जातिको विश्वव्यापी वन्धुत्व स्थापना हुनसक्छ। प्रजातीय र

राष्ट्रीय समाजहरूमा ता कुनै विशेष वंश वा देशमा उत्पन्न भएका मानिसहरू मात्र सम्मिलित हुनसक्छन् । त्यहाँ देखि बाहिरको मानिसहरूको लागि त्यस्ता जम्मै समाजको ढोका बन्द हुन्छ; यस विचारप्रधान र सिद्धान्तमूलक समाजमा भने एउटा धार्मिक विश्वास र नैतिक विधानलाई अंगीकार गर्ने प्रत्येक व्यक्ति समान अधिकारपूर्वक सामेल हुनसक्छ । अब रहे ती मानिस जसले यो विश्वास र विधानलाई मान्दैनन् । उनीहरूलाई यो समाजले आफ्नो परिधिभित्र ता ल्याउँदैन तर उनीहरूसंग मानवीय बन्धुत्व स्थापित गर्न र उनीहरूलाई मनुष्य-ताको अधिकार दिन यो तयार हुन्छ । प्रत्यक्ष छ, एउटी आमाका दुई नानीहरूको विचार भिन्न भए तिनीहरूको जीवन-यापनको ढंग प्रत्येक अवस्थामा अलग-अलग हुन्छ तर यसको अर्थ तिनीहरू दाज्यू-भाइ होइनन् भन्ने हुँदैन । त्यसरी नै मानवीय गोत्रका दुइ समूहको अथवा एकदेशीय मानिसहरूका दुइ वर्गको विश्वास र सिद्धान्तमा भिन्नता भए तिनीहरूको समाज पनि अनिवार्यत: भिन्न-भिन्न हुन्छन्, तर मनुष्यता प्रत्येक अवस्थामा अभिन्न रहन्छ । यस सम्मिलित मनुष्यताको आधारमा बेसीभन्दा बेसी जुन अधिकारहरूको कल्पना गर्नसकिन्छ ती सबैलाई इस्लामीय समाजले अमुस्लिम समाजको निम्ति पनि स्वीकार गरेको छ ।

इस्लामीय समाजका यी आधारहरू स्पष्ट भएपछि आउनुहोस् अब हेरौं इस्लामले मानवीय सम्बन्धको विभिन्न रूपको निम्ति कुन कुन सिद्धान्त र भेदहरू निश्चित गरेको छ ।

मानवीय समाजको सर्वप्रथम र मूलभूत संस्था परिवार हो । परिवारको बीजारोपण एक पुरुष र स्त्रीको सम्बन्धबाट हुन्छ । यस सम्बन्धबाट एउटा नयाँ वंशको जन्म हुन्छ । फेरि योसंग सम्बद्ध भएको परिवार र कुटुम्बको दोस्रो सम्पर्क स्थापित हुन्छ अनि यही सम्बन्ध बढ्दै-बढ्दै अन्तमा एउटा समाजसम्म पुग्छ । फेरि परिवार नै त्यो संस्था हो जहां मानवीय संस्कृतिको विस्तृत सेवाहरूको भार सम्हालनलाई एउटा पिढ़ीले आफूभन्दा पछि आउने पिढ़ीको

निर्माण अत्यन्त प्रेम, त्याग, मनोयोग र हितैषितापूर्वक गर्छ। यो संस्थाले मानवीय संस्कृतिको कल्याण, वृद्धि एवं विकासको लागि रगरूट मात्र भर्ना गर्दैन तर यसको कार्यकर्ताले आफूभन्दा आफ्ना उत्तराधिकारीहरू श्रेष्ट हुन् भन्ने हृदयदेखि चाहन्छ। यसको आधारमा वास्तविकता के देखिन आउँछ भने परिवार नै मानवीय संस्कृतिको मूल हो अनि त्यही मूलको स्वास्थ्य अनि शक्तिमाथि संस्कृतिको स्वस्थता र शक्ति निर्भर हुन्छ। यसकारण इस्लामले सामाजिक समस्याहरूमध्ये सर्वप्रथम परिवाररूपी संस्थाको स्थापना यथार्थतम र दृढतम आधारमाथि गरियोस् भन्ने विषयमा पहिला ध्यान दिन्छ।

इस्लामको दृष्टिमा स्त्री र पुरुषको सम्बन्धको उचित प्रकार केवल त्यही हुन्छ जुनसंग सामाजिक उत्तरदायित्व पनि अंगीकृत गरिएको छ अनि जसको परिणामस्वरूप एउटा परिवारको आधारशीला राखिएको छ। इस्लामले स्वच्छन्दतापूर्ण र उत्तरदायित्वहीन सम्बन्धलाई पापहीन अथवा साधारण मनोरञ्जन वा साधारण तौरको मार्गभ्रष्टता ठानेर टार्दैन; यसको दृष्टिमा यस्तो कार्य मानवीय संस्कृतिको मूलोच्छेदन गर्ने हुन्छ। यसर्थ यस्तो कार्यलाई इस्लामले पाप र अपराध ठहऱ्याएको छ। समाजमा यस्तो संस्कृति नाशक सम्बन्ध प्रचलित हुन नपाओस् भनी इस्लामले यस्ता अपराधको लागि कठोर दण्ड निश्चित गर्छ अनि उत्तरदायित्वहीन सम्बन्धलाई प्रेरणा दिने त्यसको लागि अवसर प्रदान गर्ने किसिमका कारणहरूलाई पनि सामाजिक जीवनबाट दूर गर्न चाहन्छ। पर्दासंग सम्बन्धित आदेश, स्त्री-पुरुषको स्वच्छन्द मेल-मिलापमा निषेध, संगीत र चित्रकलामाथि प्रतिबन्ध तथा अश्लील प्रकाशनमाथिका बन्धनहरू, यसकै रोकथामको लागि हो अनि ती निषेधहरूको मूल लक्ष्य पारिवारिक संस्थालाई संरक्षित र दृढ गर्नु हो। अर्कोतिर इस्लामले उत्तरदायित्वपूर्ण संबंध अथवा विवाहलाई उचित मात्र होइन एक पुण्यकार्य र धार्मिककर्म पनि मान्छ। वयस्कताप्राप्तिपछि स्त्री र पुरुष ब्रह्मचारी भईबस्नु अभीष्ट हुँदैन। आफ्नो पालो आएपछि माता-पिताले वहन गरेका सांस्कृतिक उत्तरदायित्वको जिम्मा प्रत्येक नवयुवकले लिनुपर्छ भनी इस्लामले प्रेरित गर्छ। इस्लामले निवृत्ति

मार्गलाई सत्कार्य मान्दैन, वरू त्यसलाई ईश्वरीय प्रकृतिको अवहेलना ठान्छ। विवाहलाई दुष्करकार्य बनाउने कुनै रीति र प्रथालाई पनि यसले असल सम्झदैन। यसबाट के बुझिन्छ भने सामाजिक जीवनमा विवाह सरलतम र अत्यन्त सुकर कार्य हुनुपर्छ। कठिन र व्यभिचारपूर्ण विवाह नै सरल कार्य हो भन्नेचाहिँ होइन। यसर्थ इस्लामले कतिपय विशिष्ट सम्बन्धलाई अवैध ठह्र्याएपछि नजीक र टाढ़ाका सम्बन्धीहरूमाझको दाम्पत्य-सम्बन्धलाई वैध मानेको छ। यसले उपजातीय भेदहरूलाई समाप्त गरी समस्त मुसलमानहरू माझ पारस्परिक विवाह-सम्बन्धको खुला आज्ञा दिए को छ। दुवै पक्षले सजिलोसंग पूर्ण गर्नसक्ने कम्ती 'मह्र' र यौतुक (दाइजो) तोक्नुपर्छ भन्ने आज्ञा दिइएको छ। विवाह-संस्कारको निम्ति कुनै काजी, पण्डित, पुरोहित वा दफ्तर र रेजिस्टरको आवश्यकता छैन। विवाह इस्लामीय संस्कारको एक सरल संस्कार हो जो वयस्क स्त्री-पुरुषको पारस्परिक स्वीकृति भए दुइजना साक्षीको सामु कहीं पनि पूर्ण गर्नसकिन्छ। यति हो, पारस्परिक स्वीकृति गुप्त नभई जनसाधारणमाझ घोषणापूर्वक हुनुपर्छ।

इस्लामले परिवारमा अनुशासन कायम गर्नको लागि पुरुषलाई व्यवस्थापक वा प्रबन्धको स्थान दिएको छ। पत्नीलाई पति र सन्तानलाई माता-पिता दुवैको अनुवर्त्तन र सेवा गर्ने आज्ञा दिएको छ। कुनै नियम नभएको र घरका सदस्यहरूको शील-व्यवहार ठीक राख्ने जिम्मा कसैमाथि नभएको कमज़ोर पारिवारिक व्यवस्था इस्लाममा अभीष्ट छैन। अनुशासन सधैँ एउटै व्यवस्थापक द्वारा स्थापित हुन सक्छ अनि यो उत्तरदायित्वको निम्ति परिवारमा पिता नै प्राकृतिक दृष्टिले उपयुक्त हुन्छ। तथापि यसको अर्थ पुरुषलाई घरको सर्वशक्तिमान शासक बनाउनु र नारीलाई उसको अधीनमा एउटी विवश दासीका रूपमा राख्नु भन्ने होइन। इस्लामको दृष्टिमा दाम्पत्य जीवन को प्राण हुन्छ प्रेम र सहानुभूति। नारीको कर्त्तव्य पतिको अनुवर्तन गर्नु हो भने पुरुषले पनि सुधारको लागि नै आफ्नो अधिकारको उपयोग गर्नुपर्छ, अत्याचारको लागि होइन। प्रेमको माधुर्य वा कमभन्दा कम प्रतिस्पर्धा रहुन्जेलसम्म

इस्लामले दम्पतिको पारस्परिक सम्बन्धलाई कायम राख्न चाहन्छ। यस्तो स्थिति नभए यसले पुरुषलाई 'तलाक' (पत्नी परित्याग) र नारीलाई 'खुलअ' (पति परित्याग) को अधिकार दिन्छ। कतिपय परिस्थितिमा मङ्गलको सट्टा अमङ्गल भएको दाम्पत्य सम्बन्धलाई विच्छेद गरिदिने अधिकार इस्लामीय न्यायालयलाई दिइन्छ।

परिवारको सीमित परिधिदेखि बाहिरको निकटतम सीमा छिमेकीको हुन्छ र यसको परिधि पर्याप्त रूपमा विस्तृत हुन्छ। माता र पिताको सम्बन्धबाट, भाइ र बहिनीको सम्बन्धबाट अथवा ससुरालीको सम्बन्धबाट आफन्त पर्ने मानिसहरू एका-अर्काको हितैषी, सहायक र सहानुभावक रहेको इस्लामले हेर्न चाहन्छ। 'कुरान' को ठाउँ-ठाउँमा आफन्तहरूसंग सद्व्यवहार गर्ने आदेश दिइएको छ। 'हदीस' मा घरिघरि आफन्तहरूप्रति कर्तव्यपालन गर्ने चेतावनी दिइएको छ। यसलाई अति पुण्य कार्य मानिएको छ। आफन्तहरूसंग तटस्थताको व्यवहार गर्ने अथवा सहानुभूतिरहित व्यवहार गर्नेहरू इस्लामको दृष्टिमा अति निन्दनीय हुन्। तर यसको अर्थ आफन्तहरूसंग अनुचित पक्षपात गर्नु भन्ने चाहिँ होइन। आफ्नो परिवार वा कुटुम्बको न्यायविरूद्ध समर्थन गर्नु मूर्खता हो। यसरी नै कुनै राजकीय अधिकारीले जनताको धनद्वारा आफन्तहरूको पालन-पोषण गर्छ अथवा निर्णय लिंदा उनीहरूको अनुचित पक्षपात गर्छ भने त्यो इस्लामीय कार्य हुँदैन, बरू अधर्म आचरण हुन्छ। इस्लामले आफन्तहरू प्रति गरिनुपर्ने जुन कर्तव्यपालनका आज्ञा दिएको छ त्यो व्यक्तिगत रूपमा र न्याय एवं सत्यको सीमाभित्र हुनुपर्छ।

आफन्तहरूसंग को सम्बन्ध पश्चात् दोस्त्रो सबभन्दा निकटको सम्बन्ध छिमेकी हो। 'कुरान' अनुसार छिमेकी तीन प्रकारको हुन्छ—आफन्त छिमेकी अपरिचित छिमेकी र उठ बस गर्नु सुयोग पाइने अस्थायी छिमेकी। इस्लामीय आदेश अनुसार यी सबै छिमेकी सहयोग, सहानुभूति र सद्व्यवहारका पात्र हुन्छन्। इश्वरीय सन्देशवाहक (हजरत मुहम्मद) का पवित्र वचन के छ भने

'मलाई छिमेकीप्रति को कर्त्तव्य पालनबारे यतिसम्म सावधान गराइएको छ कि म सोच्न लागें कदाचित् अब यसलाई पैतृक धनमा पनि अधिकारी बनाइनेछ ।' अर्को 'हदीस' के छ भने उनले भनेका छन् "आफ्नो दुर्व्यवहारले छिमेकीलाई अशान्ति गर्ने व्यक्ति धर्मात्मा हुँदैन ।" अर्को हदीसमा उनले भने" छेउैको छिमेकी भोकै बस्दा आफूले भुँड़ीभरी खाने व्यक्ति धर्मदेखि कोसौं दूर रहन्छ ।" एक-पल्ट ईश्वरीय सन्देशवाहक (हजरत मुहम्मद) लाई सुनाइयो कि एउटी स्त्री खूब 'नमाज' पढ़छे, प्राय: ब्रत (रोजा) लिन्छे, गजबले दान गर्छे तर उसको नराम्रो बोलीवचनदेखि उसका छिमेकी दुखी छन् । उनले भने "त्यो नरकामिणी हो ।" मानिसहरूले फेरि भने कि अर्की एउटी स्त्री छे जसको यस्ता गुण छैन तर उसले छिमेकीलाई कष्ट पनि दिँदिन । उनले भने— "उसलाई स्वर्गप्राप्ति हुन्छ ।" ईश्वरीय सन्देशवाहकले मानिसहरूलाई यसरी सावधान गराएका थिए— आफ्ना नातीहरूको लागि फल ल्यायौ भने आफ्ना छिमेकीकहाँ पनि पठाइदेऊ, नत्र निर्धन छिमेकीको मनमा दुःख नहोस् सोचेर फलको बोक्रा बाहिर नफ्याँक । एकचोटि उनले भने, छिमेकीले तिमी असल छौ भन्यो भने तिमी साँच्चै असल छौ अनि तिमीबारे छिमेकीको विचार राम्रो छैन भने तिमी नराम्रो मान्छे हौ । तात्पर्य के हो भने इस्लामले एका-अर्काको छिमेकी भई बसेका सबैलाई परस्पर सहयोग र सुख-दुःखमा समानभाव राख्ने मानिसको रूपमा हेर्न चाहन्छ । इस्लामले उनीहरूमाझ कस्तो सम्बन्ध स्थापित गर्न चाहन्छ भने सबैले एका-अर्कामाथि भरोसा राखुन र एका-अर्कामा आफ्नो-आफ्नो धन जन एवं सम्मान सुरक्षित सम्झुन् । अब रह्यो त्यस्तो समाज जहाँ एकै पर्खालभित्र बस्ने दुइ व्यक्ति वर्षौंसम्म अपरिचित रहन्छन् अनि एक मुहल्लामा बस्ने मानिसहरूमाझ कुनै सम्बन्ध, सहानुभूति र विश्वास हुँदैन । यस्तो समाज कहिले पनि इस्लामीय समाज हुन सक्दैन ।

नगीचका यी बन्धनहरू पश्चात् सम्बन्धीहरूको एउटा विशाल मण्डल आउँछ र यो सम्पूर्ण समाजमा फैलिएको छ । यस मण्डलमा इस्लामले ठूला-

दूमा सिद्धान्तहरूको आधारमा हाम्रा सामूहिक जीवनको स्थापना गरेको छ। संक्षेपमा ती यस्ता छन्—

(१) सयंमशील एवं असल कार्यमा सहयोग गर तथा नराम्रो र अत्याचारपूर्ण कार्यमा सहयोग नगर। —कुरान

(२) तिम्रो मित्रता र शत्रुता ईश्वरद्वारा निर्मित हुनुपर्छ। कुनै चीज देऊ तर किन देऊ भने ईश्वरलाई त्यसको दान प्रिय लाग्छ अनि कुनै चीज नदेऊ तर किन नदेऊ भने ईश्वरलाई त्यो दिनु प्रिय लाग्दैन। —हदीस

(३) तिमी संसारको कल्याणको निम्ति तोकिएको श्रेष्ठ समुदाय हौ; तिम्रो कर्तव्य हुन्छ सत्कार्यको लागि आदेश दिनु र दुष्कर्मलाई रोक्नु। —कुरान

(४) एका-अर्कामा अविश्वास नगर, छिद्रान्वेषण नगर, एकजनाको विरुद्ध अर्कोलाई नचम्काऊ, पारस्परिक ईर्ष्या-द्वेषदेखि अलग बस, एका-अर्काको पोल नखोल अनि ईश्वरको अनुवर्ती सेवक र परस्पर मित्र भएर बस। —हदीस

(५) कुनै अत्याचारीको अत्याचार थाह पाउँदापाउँदै उसलाई सहयोग नगर। —हदीस

(६) अन्यायमा आफ्नो जातिको समर्थन गर्नु र पोखरीमा डुब्न लागेको ऊँटको पुछर समाती आफू त्योसंगै डुब्नु एउटै हो। —हदीस

(७) आफ्नो लागि जे मन पराउँछौ अर्काको लागि पनि त्यही मन पराइदेऊ। —हदीस

# इस्लामको आर्थिक व्यवस्था

मनुष्यको आर्थिक जीवनलाई न्यायोचित र समीचीन बनाउन इस्लामले केही सिद्धांत र सीमाहरू निर्धारण गरेको छ। तिनै निर्धारित रेखाभित्र धनसम्पत्तिको उत्पादन, उपयोग एवं विनिमयका समस्त व्यवस्था चलाम् भनी यसो गरिएको हो । धन-उपार्जनको तरिका र यसको विनियमको पद्धति कस्तो हुनुपर्छ ? यस प्रश्नसंग इस्लामको केही सरोकार छैन। यी कुराहरू विभिन्न युगमा सांस्कृतिक वृद्धि एवं विकाससंगसंगै निर्मित र परिवर्तित भइरहन्छन् । यिनीहरूको निर्धारण मानवीय परिस्थिति र आवश्यकताहरूको दृष्टिकोण अनुसार स्वत: हुन्छ। इस्लामले खोजेको वस्तु के हो भने जम्मै युग र अवस्थामा मनुष्यको आर्थिक विषयहरूको जुन ढाँचा हुन्छ त्यसमा यो सिद्धान्त स्थायी ढंगले अटल रहोस् अनि यिनको मर्यादाको पालन अनिवार्य रूपमा गरियोस् ।

इस्लामीय दृष्टिकोणमा ईश्वरले मानव जातिको निम्ति पृथ्वी र यसमा भएका समस्त पदार्थ उत्पन्न गरेका हुन् । यसर्थ प्रत्येक मनुष्यलाई पृथ्वीबाट आफ्नो जीविकाको उपार्जनको प्रयत्न गर्ने जन्मसिद्ध अधिकार छ। यो अधिकार प्रत्येक मनुष्यले समान रूपमा पाउँछ, यसदेखि, कसैलाई बंचित गराउन सकिन्न न ता यस सम्बन्धमा अरू कुनै व्यक्तिलाई असको अपेक्षा वरिष्ठता प्राप्त हुनसक्छ। इस्लामीय विधान (शरअ) अनुसार कसैले कुनै व्यक्ति, प्रजाति वा वर्गमाथि जीविकाको साधनमध्ये कुनै वस्तुको उपयोगको अधिकारमा अथवा कुनै विशिष्ट व्यवसायमा प्रतिबन्ध लाउन सक्दैन। यस प्रकारले जीविकाको कुनै साधन कुनै विशिष्ट वर्ग, प्रजाति अथवा वंशको अधिकारमा आएर रहोस् भन्ने किसिमको विशिष्टता पनि इस्लामीय विधान

अनुसार निश्चित गर्न सकिंदैन । ईश्वरद्वारा निर्मित पृथ्वीमा उनले उत्पन्न गरेका साधनहरूबाट आफ्नो अंश प्राप्त गर्न प्रयत्न गर्नु मनुष्य मात्रको समान अधिकार हुन्छ अनि त्यो प्रयत्नको लागि सबैले समान अवसर पाउनुपर्छ ।

प्रकृतिका निधिहरूको निर्माण गर्दा अथवा तिनलाई उपयोगी बनाउँदा कसैको योग्यता अथवा परिश्रमको आवश्यकता नपरोस् तिनमा प्रत्येक मनुष्य-को समान अधिकार हुनुपर्छ । प्रत्येक व्यक्तिलाई आफ्नो आवश्यकता अनुसार ती विधिहरूबाट लाभ उठाउने अधिकार छ । नदी र निरर्झहरूको जल, जंगलको दाउरा, प्राकृतिक वृक्षको फल, आफै उम्रिएका घांस-पात र चारो, वायु, जल र अन्य पशु, भूतलमा आफै निस्किएको खनिज पदार्थ—त्यस्ता वस्तुहरूमाथि न ता कसैको एकाधिकार हुनसक्छ न ता बदलामा केही दिएर मात्र ती वस्तुद्वारा आफ्नो आवश्यकताहरूको पूर्ति गर्न सक्छ भनी प्रतिबन्ध लाउन सकिन्छ । हो, जसले व्यापारिक स्वार्थको लागि उच्च स्तरमा तीमध्ये कुनै चीजको उपयोग गर्न चाहन्छ भने तीमाथि कर लाउन सकिन्छ ।

ईश्वरले मनुष्यको लाभको लागि बनाएका वस्तुहरूलाई प्राप्त गरेपछि उपयोग नगरी राख्नु ठीक हुंदैन । आफूले तिनीहरूबाट कि ता लाभ उठाऊ कि ता अरूले लाभ उठाओस् भनी छोड़िदेऊ । यही सिद्धान्तको आधारमा इस्लामीय विधिमा के निर्णय पाइन्छ भने कसैले आफ्नो जमीनलाई तीन वर्षभन्दा बेसी बांझो राख्न हुंदैन । उसले त्यो भूमिलाई कृषि, गृहनिर्माण अथवा अरू कुनै काममा उपयोग नगरे सो समय बितेपछि त्यसलाई परि-त्यक्त सम्पति ठानिन्छ । अरू कसैले त्यसको उपयोग गर्‍यो भने उसको विरुद्ध अभियोग लाउन सकिन्न अनि इस्लामीय शासनले समेत त्यो भूमि अर्को व्यक्तिलाई सुम्पिदिन सक्छ ।

कसैले प्राकृतिक कोषबाट स्वयं कुनै वस्तु लिएर त्यसलाई आफ्नो परि-

श्रम र योग्यताले उपयोगी बनाए त्यसको स्वामी उ नै हुन्छ । अस्तै स्वामी-त्वहीन परित्यक्त भूमिलाई कसैले आफ्नो अधीनस्थ गराई उपयोगी कार्यमा प्रयोग गरे उदेखि त्यो भूमि खोस्न सकिदैन । इस्लामीय दृष्टिकोणमा स्वामीत्व सम्बन्धी समस्त अधिकारको आरम्भ यसरी नै भएको छ । शुरू-शुरूमा पृथ्वीमा मानवीय जनपदको आरम्भ हुंदा समस्त वस्तुहरू जम्मै मानिसको-लागि उपभोग्य थिए । त्यसपछि जसले जुन उपभोग्य वस्तुलाई आफ्ना अधि-कारमा ल्याएर उपयोगी बनायो ती वस्तुको मालिक उनै भयो । तिनको उपयोग विशेषतया आफ्नै लागि गर्ने र अरूले उपयोग गर्न चाहे उनीहरू-बाट त्यसको बदलामा केही लिने अधिकार उसले पायो । यो तथ्य मनुष्यका समस्त आर्थिक विषयको प्राकृतिक आधार हो र यो आधार यस्तै रहनुपर्छ ।

उचित वैधानिक (शरओ) रीति अनुसार स्वामीत्व सम्बन्धी जति अधि-कारहरू कसैलाई संसारमा प्राप्त छ तिनको सम्मान जुनसुकै अवस्थामा पनि हुनुपर्छ । विवाद भए कसैको स्वामीत्व वैधानिक रूपमा ठीक छ कि छैन भन्ने विषयमा हुनसक्छ । वैधानिक दृष्टिले अनुचित स्वामीत्व निस्सन्देह समाप्त हुनुपर्छ तर अधिकृत वस्तुहरू वैधानिक वा (शरअन) ठीक भए कुनै शासन र विधान परिषद्ले ती वस्तुलाई राष्ट्रीय सम्पति मान्न सक्दैनन् । ती वस्तुहरूको विधानसिद्ध (शरओ) अधिकारलाई घट-बढ गर्ने अधिकार पनि हुँदैन । सामूहिक उन्नति अथवा सामाजिक कल्याणको नाममा इस्लामीय विधि (शरअ) ले दिएका अधिकारहरूलाई हनन गर्ने किसिमको व्यवस्था स्थापित गर्न सकिदैन । इस्लामीय विधिले समूहको लाभको लागि व्यक्तिको अधिकृत सम्पतिमाथि जुन प्रतिबन्ध लाइदिएको छ त्यसमा कम गर्दा जति ठूलो अत्याचार हुन्छ त्यति नै ठूलो अत्याचार त्यसमा बृद्धि गर्दा हुन्छ । मानिसहरूको वैधानिक (शरओ) अधिकारको रक्षा हुनुपर्छ अनि इस्लामीय विधानले जति कर्तव्यहरू निश्चित गरेको छ उनीहरूलाई समाजको लागि तिनको पालन गर्न लाउनुपर्छ भन्ने कुरो इस्लामीय शासनको कर्तव्यभित्र आउँछ ।

ईश्वरले आफ्ना विधिहरूको वितरण समान रूपले गरेका छैनन्, बरु कतिपय व्यक्तिलाई नीति र कुशलताले गर्दा अरूहरूको अपेक्षा श्रेष्ठ बनाएका छन्। सौन्दर्य, कण्ठ-माधुर्य, स्वास्थ्य, शारीरिक शक्ति, बौद्धिक योग्यता, सहज वातावरण र यस्तै अरू कुराहरू सबैले बराबर पाएका छैनन्। यही अवस्था जीविकाको पनि छ। ईश्वरद्वारा निर्मित प्रकृतिकै के अपेक्षा हुन्छ भने मनुष्यहरूमाझ जीविका सम्बन्धी असमानता होस्। अतएव मानिसहरूको बीचमा कृत्रिम आर्थिक अथवा जीविका सम्बन्धी समानता स्थापित गर्नलाई सुधारात्मक दृष्टिले गरिने समस्त उपायहरू लक्ष्यतः एवं सिद्धान्ततः भ्रमपूर्ण छन्। इस्लामले स्वीकार गरेको समानता जीविका सम्बन्धी समानता होइन तर जीविका-उपार्जनको प्रयत्नमा गरिने समानता हो। इस्लाम चाहन्छ, समाजमा कसैले शक्ति र योग्यता अनुसार जीविका सम्बन्धी प्रयत्न गर्न नसक्ने किसिमका विधि सम्बन्धी अथवा रूढ़ी सम्बन्धी बाधाहरू अवस्थित नरहुन् अनि कुनै वर्ग, प्रजाति र वंशको मात्र जन्मजात सौभाग्यलाई स्थायी वैध संरक्षणमा परिवर्तित गर्ने किसिमको विशिष्टताहरू पनि नरहुन्। यी दुवै प्रकारबाट प्राकृतिक असमानता होइन तर जबर्जस्ती एक कृत्तिम असमानता स्थापित हुन्छ। यसैले इस्लामले तिनीहरूलाई हटाएर समाजको आर्थिक अवस्थालाई यस्तो प्राकृतिक अवस्थामा पुऱ्याउन चाहन्छ जसमा प्रत्येक व्यक्तिले प्रयत्नको समान अवसर पाओस्। तर प्रयत्नका साधन र परिणाममा पनि सबैलाई बलपूर्वक समान बनाउन चाहने व्यक्ति-हरूसंग इस्लामको सहमति छैन, किनभने तिनीहरू प्राकृतिक असमानतामा हेरफेर गर्न चाहन्छन्। प्रकृतिको सबभन्दा नगीचको व्यवस्था त्यो मात्र हुनसक्छ जसमा प्रत्येकले जीविका-उपार्जनको क्षेत्रमा आफ्नो दौड़को आरम्भ त्यही ठाउँबाट गरोस् जुन ठाउंमा उसलाई ईश्वरले जन्म दिएका छन्। गाड़ी लिएर आउनेहरू गाड़ीमै हिड्नु दुइ खुट्टा लिएर आउनेहरू पैदलै हिड्नु अनि लंगड़ा भई उत्पन्न हुनेहरू खोच्याउँदै हिड्नु। गाड़ीवालाको निम्ति स्थायी एकाधिकार स्थापित गर्ने अनि लंगड़ाको निम्ति गाड़ीको प्राप्ति

असम्भव बनाउने सामाजिक विधि पनि हुनु हुँदैन । फेरि, सबैको दौड़को आरम्भ जबर्जस्ती एउटै स्थान र स्थितिमा होस् अनि उनीहरूलाई पछिसम्म एकाअर्कासंग बाँधेरै राखियोस् भन्ने पनि हुनुहुँदैन । यसको विपरीत नियममा एउटा कुराको खुला सम्भावना रहनुपर्छ । त्यो के हो भने, जसले आफ्नो दौड़को आरम्भ खोच्चउँदै गरेको थियो उसले परिश्रम र योग्यताद्वारा गाड़ी पाउनसक्छ भने अवश्य पाओस् अनि जो शुरूमा गाड़ीमा चढ़ेको थियो उ पछि अयोग्यताले गर्दा लंगड़ा भएर बस्छ भने बसोस् ।

सामूहिक जीवनमा यो दौड़ खुला र निष्पक्ष होस् भन्ने मात्र इस्लामले चाहेको होइन तर दौड़मा भाग लिनेहरू एका-अर्काको लागि निर्दय र निष्करूण नबनुन् बरू सहायक र सहअनुभावक हुन् भन्नु पनि चाहेको हो । इस्लामले एकातिर नैतिक शिक्षाद्वारा मानिसहरूमा पछाड़िएका र क्लान्त वन्धुहरूलाई आश्रम दिने मनोवृत्ति उत्पन्न गर्छ भने अर्कोतिर समाजमा दीन र साधनहीन मानिसको सहायताको लागि प्रतिभू अथवा उत्तरदायी हुने स्थायी संस्था होस् भन्ने चाहन्छ । आर्थिक दौड़मा भाग लिने योग्य मानिस छैन भने उनीहरूले यस संस्थाबाट आफ्नोभाग पाउन् । संयोगवश दौड़मा जो उत्रेका छन् उनीहरूलाई संस्थाले यसरी उठाएर फेरि हिंड्ने योग्य बनाओस् अनि जसलाई औद्योगिक क्षेत्रमा उत्रनुको लागि आश्रमको आवश्यकता छ उनीहरूले यस संस्थामा आश्रम पाउन् । यस आवश्यकताको पूर्तिको निम्ति इस्लामले वैध रूपमा के निश्चयगरेको छ भने समस्त देशको सामूहिक सम्पतिको अढाई प्रतिशत वार्षिक अनि त्यसरी नै सम्पूर्ण व्यापारिक धनको पनि अढाई प्रतिशत वार्षिक 'जकात' (धर्मादय) उठाउनुपर्छ । समस्त दशांश हार्य (उश्री) भूमिको कृषि सम्बन्धी उब्जनीको दस प्रतिशत वा पांच प्रतिशत भाग लिनुपर्छ । खानीको उपजको बीश प्रतिशत भाग लिनुपर्छ. पशुहरूको एक विशेष संख्यामाथि पनि विशेष अनुपात अनुसार 'जकात' (धर्मादय) लिनुपर्छ अनि समस्त धन अनाथ, गरीब र अङ्गभङ्ग भएकाहरूको सहायथार्थ उपयोग गर्नुपर्छ । यो एउटा यस्तो बीमा हो जसबाट इस्लामीय समाजमा कुनै व्यक्ति जीवनको अनिवार्य

आवश्यकताहरूदेखि बंचित रहँदैन। कुनै परिश्रमी व्यक्ति खानेकुरो नपाइने भयले कारखानाको मालिक वा जमीन्दारले कामको निम्ति राखेको शर्तहरू स्वीकार गर्न विवश हुनुपर्दैन। आर्थिक प्रयत्नहरूमा भाग लिनको लागि कुनै व्यक्तिको शक्ति आवश्यक निम्नतम स्तरदेखि तल झर्न सक्दैन।

इस्लामले व्यक्ति र संस्थाको बीचमा कस्तो सन्तुलन स्थापित गर्न चाहन्छ भने व्यक्ति-व्यक्तित्व र उसको स्वतन्त्रता कायम रहोस् अनि सामूहिक लाभको निम्ति उसको स्वतन्त्रता हानिकारक पनि नहोस्, बरू अनिवार्यत: लाभदायक होस्। समाजमा व्यक्तिलाई मिलाइ दिने अनि उसको वास्तविक वृद्धि एवं विकासको लागि चाहिँदो स्वतन्त्रता नदिने राजनैतिक अथवा आर्थिक व्यवस्था इस्लामको अभीष्ट होइन। कुनै देशको समस्त उत्पादन साधनहरूलाई राष्ट्रीय सम्पति बनाइदिदा त्यसको अनिवार्य परिणाम के हुन्छ भने देशका सम्पूर्ण मानिसहरू सामूहिक पिंजडामा थुनिन्छन् यस्तो अवस्थामा उसको व्यक्तित्वको अक्षुण्णता एवं विकास अत्यन्त कठिन मात्र होइन असम्भव हुन्छ। मनुष्यको मूलोच्छेद नगर्नु हो भने हाम्रो सामूहिक जीवनमा यति अवकाश अवश्य हुनुपर्छ कि ईश्वरको एक प्राणीले स्वतन्त्रतापूर्वक जीविका उपार्जन गरोस्, आफ्नो अन्तप्रेरणाको स्थिरतालाई कायम राख्न सकोस् अनि आफ्नो प्रवृत्ति अनुसार मानसिक एवं नैतिक शक्तिहरूको विकास गर्न सकोस्। अरूकै हातमा कुँजी भएको राशिनको अन्न पर्याप्त होस् तथापि त्यो चित्तबुझ्दो हुँदैन किनभने उन्मुक्ततामा जुन बन्धन छ त्यसलाई शारीरिक पुष्टताले मात्र कदापि तृप्त पार्न सक्दैन।

इस्लामले यस्तो व्यवस्था मन नपराए जस्तै व्यक्तिहरूलाई व्यावहारिक एवं आर्थिक जीवनमा निर्बाध स्वतन्त्रता दिने अनि उनीहरूलाई इच्छाको पूर्ति गर्न अथवा लाभको लागि समुदायमा हानि पुऱ्याउन मौका दिने सामूहिक व्यवस्थालाई पनि राम्रो मान्दैन। यी दुवै पराकाष्टहरूको बीचमा इस्लामले जुन मध्यम मार्ग लिएको छ त्यो हो समाजको लागि व्यक्तिलाई पहिले केही सीमा र

उत्तरदायित्वहरू स्वीकार गर्न लाइयोस् र त्यसपछि उसलाई आफ्नो कार्यमा स्वतन्त्र छोड़ियोस् । यी सीमा र उत्तरदायित्व हरूको विवरण दिइरहने अवकाश नहुँदा म यहां एउटा संक्षिप्त रूपरेखा मात्र प्रस्तुत गर्छु ।

सर्वप्रथम जीविकाको उपार्जनलाई नै लिनुहोस् । धन उपार्जनको साधन-हरूमा इस्लामले जति सूक्ष्मदर्शितासंग उचित र अनुचितको वर्गीकरण गरेको छ त्यो संसारको कुनै विधानमा पाइँदैन । जुन साधनद्वारा एउटाले अरूलाई अथवा सामूहिक रूपमा सम्पूर्ण समाजलाई नैतिक वा भौतिक हानि पुऱ्याएर आफ्नो जीविका चलाउँछ ती साधनहरूलाई इस्लामले छानी-छानी हराम (पाप) घोषित गर्छ । मदिरा र अन्य मादक पदार्थ बनाउनु र बेच्नु, वेश्या-वृत्ति र संगीत-नृत्यको व्यवसाय, जूवा, सट्टा लाटरी सूद, अनुमान, कलह र कपटको बेपार, एक पक्षलाई लाभ निश्चित हुने र अरूलाई शंकाजनक हुने बेपारहरू गर्नु, आवश्यक वस्तुहरू थुपारेर दाम बढ़ाउनु अनि सामूहिक रूपमा हानिकारक बिचारहरूलाई इस्लामीय विधिमा पाप (हराम) घोषित गरिएका छन् । इस्लामीय विधिको सिंहावलोकन गर्नुभयो भने यस्ता पापपूर्ण कार्यहरूको एउटा लामो सूची तयार हुन्छ अनि त्यहाँ धेरै रीतिहरू, पाउनुहुनेछ जसको आश्रय लिएर वर्तमान पुँजीवादी व्यवस्थामा मानिस करोड़पति बनिन्छ । इस्लामले यी सब कार्यलाई वैध रूपमा बन्द गरिदिन्छ अनि अरूको वास्तविक र यथार्थ सेवा गरी न्यायपूर्वक प्रतिदान प्राप्त गरिने अर्थ उपार्जनका प्रकार-हरूलाई मात्र स्वतन्त्रता दिन्छ ।

उचित प्रकारले उपार्जित सम्पत्तिको स्वामीत्व सम्बन्धी अधिकारलाई इस्लामले मान्छ तर यो अधिकार पनि सीमारहित छैन । मनुष्यले उचित कमाइको खर्च पनि वैध उपायद्वारा उचित कार्यमै गर्नुपर्छ भन्ने नियन्त्रण इस्लाममा पाइन्छ । इस्लामले खर्चबारे लाएको बन्धनको फलस्वरूप मनुष्यले शुद्ध एवं पवित्र जीवन व्यतित गर्नसक्छ तर भोगविलासमा सम्पति उड़ाउन सक्दैन । न ता अरूमाथि आफ्नो ऐश्वर्यको आतंक फैलाउने आडम्बर र प्रदर्शन-

मा स्वच्छन्द हुनसक्छ। इस्लामीय विधिमा अपव्ययका केही प्रकारलाई स्पष्ट गरी निषिद्ध ठहराइएको छ, केही प्रकारबारे स्पष्टीकरण छैन तर इस्लामीय शासनले मानिसलाई सम्पतिको अपव्यय गर्नुबाट आदेशपूर्वक रोक्नसक्छ।

मानिसले उचित र उपयुक्त ढंगले बँचाएको सम्पतिलाई एकत्र गर्न पनि सक्छ अनि नयां धन उपार्जनको लागि लगाउन पनि सक्छ; तर यी दुवै अधिकारमा नियन्त्रण छ। एकत्र गर्‍यो भने उसले 'निसाब[1] भन्दा बेसी सम्पतिको अढाई प्रतिशत वार्षिक 'धर्मादय' दिनुपर्छ। व्यवसायमा लाउने हो भने उसले उचित व्यवसायमा मात्र लाउन सक्छ। उचित व्यवसाय उ आफैले गरोस् कि सम्पत्ति, द्रव्य, भूमि, शस्त्र वा उपकरणको रूपमा अरूलाई दिएर लाभ र हानिमा सहभागी बनोस्—दुवै प्रकारको व्यवसाय वैध हुन्छ। यस्तो सीमाभित्र काम गरी कोही करोड़पति नै हुन्छ भने पनि आपत्तिजनक ठहरिदैन, बरू ईश्वरीय प्रसाद ठहरिन्छ। तर इस्लामले सामूहिक लाभमा दुइवटा प्रतिबन्ध लगाएको छ। पहिलो, मान्छेले आफ्नो व्यापारिक सम्पत्तिमाथि धर्मादाय अनि कृषिजन्य उपजमाथि उश्र[2] दिनुपर्छ। दोस्रो, मान्छेले आफ्नो शिल्प व्यवसाय अथवा कृषिमा जो संग साझेदार हुने वा पारिश्रमिक दिने सम्झौता गर्छ उनीहरूलाई न्याय गर्नुपर्छ। उ आफैले यस्तो व्यवहार गरेन भने इस्लामीय शासनले उसलाई यसो गर्न वाध्य गराउँछ।

फेरि यसरी उचित सीमाभित्र एकत्र भएको सम्पत्तिलाई पनि इस्लामले अधिक समयसम्म एकत्रित हुनु दिदैन र विधि अनुसार प्रत्येक पिडीपछिको दोस्रो पिड़ीमा त्यसलाई फैलाउँदै लान्छ। यो विषयमा इस्लामीय विधिको

---

१. कम्तीको ५२ तोला चाँदी वा साढ़े सात तोला सुनलाई 'निसाब' भनिन्छ। यति अथवा योभन्दा अधिक द्रव्यमाथि धर्मादय अनिवार्य हुन्छ।

२. सिचाइको पारिश्रमिक दिएपछि जुन भूमिमा अन्न उत्पन्न हुन्छ त्यसको उपजमाथि पांच प्रतिशत अनि सिचाइबिना अन्न उत्पन्न हुने भूमिको उपजमाथि बुझाउनुपर्ने १० प्रतिशत करलाई 'उश्र' भनिन्छ।

प्रवृत्ति संसारका अरू जस्तै विधिको प्रवृत्तिभन्दा भिन्न छ। अरू विधिहरूले एकपल्ट एकत्रित भएको सम्पत्ति पिढ़ी-पिढ़ीसम्म एकत्रित नै रहोस् भन्ने प्रयत्न गर्छन्। यसको विपरीत इस्लाममा एक जनाले जीवनभर सञ्चित गरेको सम्पत्ति उ मर्नेबित्तिकै उसका आफन्तहरूमाझ बाँड्नुपर्ने नियम छ। नजीकको आफन्त छैन भने टाढ़ाका सम्बन्धीहरू आपना-भाग अनुसार त्यसको अधिकारी हुन्छन्। टाढ़ाको पनि सम्बन्धी छैन भने सो सम्पतिको अधिकारी सम्पूर्ण मुस्लिम समाज हुन्छ। यो विधि अनुसार जति नै शक्तिशाली पुँजीवाद र जागीरदारी पनि स्थायी र नित्य हुँदैन। अघि उल्लेख गरिएका जस्तै प्रतिबन्धहरू, हुँदा हुँदै पनि सम्पतिको संचयबाट कुनै दोष उत्पन्न भइहाले यो अन्तिम प्रहारले त्यसको परिमार्जन गर्छ।

# इस्लामको आध्यात्मिक व्यवस्था

इस्लामको आध्यात्मिक व्यवस्था कस्तो छ अनि सम्पूर्ण जीवन-व्यवस्थासंग यसको कस्तो सम्बन्ध छ ? यसको उत्तर बुझ्नलाई पहिले आध्यात्मिकताको इस्लामीय कल्पना र अन्य धार्मिक दर्शनप्रधान व्यवस्थाको कल्पनामा पाइने अन्तरलाई राम्ररी बुझ्नुपर्छ। यो अन्तर हृदयङ्गम नहुंदा प्रायः के हुन्छ भने इस्लामीय आध्यात्मिक व्यवस्थाबारे कुराकानी हुंदा मान्छेको मस्तिष्कमा अवचेतन रूपमा त्यस्ता अनेक विचार आउन थाल्छन् जो साधारणतया 'आध्यात्मिकता' शब्दसंग जोड़िएर बसेका हुन्छन्। फेरि यस्तो द्विविधामा परेपछि मान्छेलाई के बुझ्न कठिन पर्छ भने यो कुन प्रकारको आध्यात्मिक व्यवस्था हो जो आत्माको परिचित परिधिदेखि बाहिर गएर आत्मा एवं शरीरको सीमामा अतिक्रमण गर्छ, अतिक्रमण मात्र होइन त्योमाथि शासन गर्न चाहन्छ।

दर्शन र धर्मबारे साधारणतया कस्तो विचार क्रियाशील रहेको छ भने शरीर र आत्मा परस्पर विरोधी छन्, दुवैको संसार अलग-अलग छ, दुवैको संसार एका-अर्कादेखि भिन्न मात्र होइन, परस्पर विरोधी छ। यी दुवैको एकैसाथ उन्नति सम्भव छैन। आत्माको लागि शरीरको संसार एक कारागार हो। सांसारिक जीवनको पारस्परिक सम्बन्ध र मनोरञ्जनको कसिलो बन्धनमा 'रूह' बाँधिन्छ। सांसारिक सम्बन्ध र व्यवहार एउटा दलदले भूमि हो जहाँ भासिएपछि आत्माको उन्मुक्ति समाप्त हुन्छ। यो कल्पनाको अनिवार्य परिणाम के भयो भने आध्यात्मिकता र सांसारिकताको मार्ग एका-अर्कादेखि सर्वथा अलग हुनगयो। सांसारिकताको अवलम्बन गर्नेहरू आध्यात्मिकताले साथ दिदैन भनी प्रथम चरणमै निराश भइहाले। यस विचारले उनीहरूलाई भौतिकतामा मग्न बनाइदियो। सामाजिक व्यवहार, संस्कृति, राजनीति, अर्थसम्बन्धी व्यवहार जस्ता सांसारिक जीवनका समस्त अंगहरू

आध्यात्मिक प्रकाशबाट टाढ़ा रहे र अन्तमा पृथ्वी अत्याचारमा डुब्यो । अर्कोपट्टि, आध्यात्मिकताका प्रेमीहरूले आफ्नो आत्मिक उन्नतिको लागि यस्ता मार्गहरूको अन्वेषण गरे, जुन मार्गहरू संसारदेखि बाहिर-बाहिरै भएर जान्छन् किनभने उनीहरूको विचारमा संसारभित्रैबाट भएर जाने आत्मिक उन्नतिका मार्गहरू, ता सम्भव नै छैन । उनीहरूको दृष्टिमा आत्माको विकासको निम्ति शरीरलाई कमजोर र दुर्बल बनाउनु पर्थ्यो । यसर्थ उनीहरूले वासनालाई दमन गर्ने र शरीरलाई अनुभूतिहीन अथवा अचेतन बनाउने तपस्याहरूको अविष्कार गरे । उनीहरूले आत्मिक संस्कारको लागि सभ्यताको कोलाहलले ज्ञान-ध्यानसंग सम्बन्धित कार्यहरूमा विघ्न उपस्थित नगर्ने वन, पर्वत र एकान्त ठाउँहरूलाई उपयुक्त ठाने । आत्माको उन्नति र विकासको लागि उनीहरूले यस्ता कुनै पनि तरीका सोचेनन् जसद्वारा संसार र यसका कार्यहरूबाट हात झिक्न सकिन्छ अनि ती समस्त सम्बन्धलाई भत्काउन सकिन्छ जसले उनीहरूलाई भौतिक विषयहरूसंग सम्बन्ध राख्छन् ।

फेरि शरीर र आत्माको यो विरोधबाट मनुष्यको उन्नति सम्बन्धी दुइ धारणा र दुइ लक्ष्य उत्पन्न भयो । एकापट्टि, सांसारिक जीवनको उत्कर्षको प्रयोजन के निश्चित भयो भने मनुष्य केवल भौतिक निधिहरूद्वारा सम्पन्न हुनु पर्छ । यस्तो सभ्यताको पराकाष्ठा निश्चित भयो कि मनुष्य एक असल पक्षी, एक श्रेष्ठ गोदी, एक सुन्दर घोड़ा र एक सफल ब्वांसो बन्नुपर्छ । अर्कोपट्टि, आध्यात्मिक जीवनको उत्कर्षको प्रयोजन के मानियो भने मनुष्य केही दिव्य एवं अलौकिक शक्तिहरूको स्वामी बनोस् अनि यसको चरमसीमा निश्चित भयो कि उ एक सुन्दर रेडियो-सेट, एक शक्तिशाली दूरवीक्षण तन्त्र र एक अणुवीक्षक यन्त्र बनोस् अनि उसको दृष्टि अथवा शब्दले एकपूर्ण औषधालयको काम गरोस् ।

यस विषयमा इस्लामको विचार संसारका समस्त धार्मिक एवं दर्शनप्रधान व्यवस्थाहरूभन्दा भिन्न छ । यसको भनाइ छ ईश्वरले पृथ्वीमा मान्छेलाई

आफ्नो प्रतिनिधि नियुक्त गरेका छन् । मान्छेलाई केही अधिकार, केही कर्तव्य र उत्तरदायित्व सुम्पिएको छ अनि तिनको पालन गर्नलाई उसलाई एक श्रेष्ठ र उपयोगी ढंगको शरीर दिइएको छ । उसले आफ्नो अधिकारको उपभोग र आफूले गर्नुपर्ने सेवाकार्य गर्न यो शरीरलाई काममा लाउनु पर्छ । अतएव यो शरीर त्यो आत्मा को निम्ति कारागार होइन तर कार्यालय हो र उसले यो कार्यालयका उपकरणहरू र शक्तिहरूको उपयोग गरी आफ्ना योग्यताको प्रदर्शन गरेमात्र आत्माको उन्नति हुनसक्छ । फेरि यो संसार कुनै नरक होइन जसमा मानव आत्मा आएर पसेको छ । यो ता कार्यक्षेत्र हो जहाँ कार्य गर्नको लागि उसलाई ईश्वरले पठाएका हुन् । उसले उपभोग गरोस् भनी यहाँ असंख्य वस्तुहरू दिइएको छ । यहाँ अनेकौं मनुष्यलाई यहां प्रतिनिधित्व संग सम्बन्धित कर्तव्यहरूको पालन गर्नको लागि उत्पन्न गरिएका छन् । यहां प्रकृतिको आकांक्षा अथवा अपेक्षा अनुसार संस्कृति, सभ्यता, सामाजिक जीवन' व्यावहारिकता, राजनीति र जीवनका अन्य अनेक अंग उसको लागि प्रकट भएका छन् । यहाँ यदि आध्यात्मिक उन्नति सम्भव छ भने मनुष्य कार्यक्षेत्रदेखि विमुख भएर एकान्त ठाउँमा गएर होइन तर यहीं कार्यक्षेत्रमा कामगरी आफ्नो योग्यताको प्रमाण दिएर सम्भव छ । उसको लागि पृथ्वी परीक्षा-स्थल हो । जीवनको प्रत्येक पक्ष र अंग मानौं परीक्षाको पश्न-पत्र हो । घर, मुहल्ला, हाट-बाजार, दफ्तर, कारखाना, शिक्षणालय, थाना-कचहरी, छाउनी, संसद सन्धि-सम्मेलन र युद्धभूमि सबै विभिन्न विषयका प्रश्न-पत्र हुन् र ती सम्मैको उत्तर मनुष्यले दिनुपर्छ । उसले यीमध्ये कुनै प्रश्न-पत्रको उत्तर दिँदैन अथवा अधिकांश प्रश्न-पत्रलाई त्यसै छोड़िदिन्छ भने शून्यभन्दा बेसी के पाउन सक्छ ? उसले परीक्षा दिनमा आफ्नो सारा समय र मनोयोगको उपयोग गर्‍यो र उसलाई दिएजति सबैको केही न केही उत्तर दियो भने सफलता र उन्नतिको सम्भावना हुन्छ ।

यसरी इस्लामले निवृत्तिमार्गको कल्पनालाई नष्ट गरी मान्छेको आत्मिक उन्नतिको मार्ग संसार-बाहिरबाट होइन संसारभित्रैबाट तयार गर्छ । आत्मिक

उन्नति एवं विकास, वृद्धि, कल्याण र सफलताको वास्तविक स्थान जीवन सम्बन्धी कार्यक्षेत्रको ठीक बीचमा छ, किनारमा होइन। अब हामीले हेर्नुछ, इस्लामले हाम्रो सामु आत्माको उन्नति र अवन्नतिको कस्तो कसौटी अथवा स्तर प्रस्तुत गर्छ ? यसको उत्तर यही प्रतिनिधित्वको कल्पनामा पाइन्छ जसको चर्चा मैले गरिसकेको छु। मनुष्य प्रतिनिधि भएको हुनाले उ आफ्नो सम्पूर्ण कार्यकलापको विषयमा ईश्वरको सामु उत्तरदायी हुन्छ। उसलाई संसारमा जति अधिकार र साधन दिइएको छ तिनको उपयोग ईश्वरीय इच्छा अनुसार गर्नु उसको कर्त्तव्य हो। जति योग्यता र भक्ति उसले पाएको छ त्यसको बेसी-भन्दा बेसी उपयोग ईश्वरको प्रसन्नताको लागि गरोस्। उसलाई अरूसंग विभिन्न सम्बन्धद्वारा सम्बद्ध गरिएको छ र उनले तीमध्येबाट ईश्वरका प्रियजनलाई चुनोस्। यसको तात्पर्य हुन्छ, उसले आफ्ना समस्त चेष्टा र प्रयत्नहरूको लागि त्यो मार्ग अवलम्बन गरोस् जसको फलस्वरूप सांसारिक व्यवस्था त्यत्तिकै सुन्दर होस् जतिको ईश्वरले चाहेका छन्। मनुष्यले यस सेवा-कार्यलाई जति बेसी सावधानी, उत्तरदायित्वपूर्ण, कर्त्तव्यपरायणता, अनुवर्तन र आदेशपालनको भावनाले गर्छ त्यति नै उ ईश्वरको नजीक पुग्छ अनि ईश्वरको नजीक पुग्न पाउनु आत्मिक विकास हुनु हो। यसको विपरीत उ जति अल्छी, कामचोर र कर्त्तव्य-विमुख हुन्छ अथवा जति उदण्ड, विद्रोही, आदेशको उलङ्घन गर्ने हुन्छ त्यति नै ईश्वरदेखि टाड़ा हुन्छ अनि इस्लामीय दृष्टिमा ईश्वरदेखि टाढ़ो रहनु नै मनुष्यको आत्मिक अवन्नति हुनु हो।

उपर्युक्त व्याख्याबाट के स्पष्ट हुन्छ भने धर्मप्राण गृहस्थ र साधारण गृहस्थ दुवैको कार्यपरिधि एउटै हुन्छ। एउटै कार्यक्षेत्रमा दुवैले कार्य गर्छन् तर धर्मात्मा व्यक्ति गृहस्थभन्दा पनि अधिक मनोयोगसंग व्यस्त हुन्छ। घरको चार पर-खालभित्र देखि लिएर अन्तर्राष्ट्रीय सम्मेलनसम्म जीवन सम्बन्धी जति विषय छन् ती सबको उत्तरदायित्व धर्मात्माले पनि गृहस्थले झैं, अझ त्यो भन्दा बढ़ेर लिन्छ। हो, उनीहरूलाई परस्पर अलग गर्ने वस्तु हुन्छ ईश्वरसंग उनीहरूको सम्बन्ध कस्तो

छ त्यसको तरीका । धर्मपरायण व्यक्तिले ईश्वरको अघि उत्तरदायी हुनुपर्छ भन्ने विचारले काम गर्छ । उसको कामको लक्ष्य ईश्वरलाई प्रसन्न गराउने हुन्छ अनि उसले ईश्वरद्वारा निर्धारण गरेको विधान अनुसार कार्य गर्छ । यसको विपरीत साधारण गृहस्थले जे गर्छ उत्तरदायित्वविहीन ढंगले र ईश्वरबाट विमुख भई आफ्नै इच्छा अनुसार गर्छ । यही अन्तरले गर्दा धर्मपरायण व्यक्तिको सम्पूर्ण भौतिक जीवनलाई पूर्णतया अध्यात्मिक बनाइदिन्छ अनि साधारण गृहस्थको जीवनलाई आध्यात्मिकाको प्रकाशले रहित तुल्याउँछ ।

अब म संक्षिप्त रूपमा बताउँछु, इस्लामले सांसारिक जीवनको क्षेत्रमा मनुष्यको आत्मिक विकासको मार्ग कसरी तयार गर्छ ।

यो मार्गको प्रथम खुड्किलो विश्वास हो । ईश्वर नै मनुष्यको स्वामी, शासक र उपास्य हुन्, ईश्वरको प्रसन्नता नै उसका समस्त प्रयत्नहरूको लक्ष्य हो तथा ईश्वरीय आज्ञा नै उसको जीवनको लागि विधि हो भन्ने विचार उसको मन र मस्तिष्कमा रहनु विश्वास हो । यो विचार जति दृढ र अविचल हुन्छ त्यति नै बेसी इस्लामीय मनोवृत्ति बनिन्छ अनि त्यति बेसी निष्ठा र अविचलतापूर्वक मनुष्य उन्नतिको मार्गमा अघि बढ्छ ।

यो मार्गको दोस्रो खुड्किलो अनुवर्तन हो अर्थात् मनुष्यले जानी-बुझी आफ्नो स्वच्छन्दतालाई त्याग गर्नु र व्यावहारिक रूपले ईश्वरको त्यस अनुवर्तनको अवलम्बन गरिदिनु जसलाई उसले सैद्धान्तिक रूपले आफ्नो प्रभु मानिसकेको छ । कुरानको भाषामा यही अनुवर्तनको नाम 'इस्लाम' हो ।

तेस्रो अवस्था 'संयम' (तकवा) हो जसलाई साधारण भाषामा कर्तव्य-परायणता र उत्तरदायित्व सम्बन्धी अनुभूति भन्नसकिन्छ । मनुष्यले आफ्नो जीवनको प्रत्येक क्षेत्रमा के सोचेर कार्य गर्छ भने उसले आफ्नो चिन्तन, वचन र कर्मको हर-हिसाब ईश्वरलाई दिनुपर्छ; ईश्वरले निषेध गरेका कुनै कार्य गर्नु

हुँदैन । यसैलाई 'संयम' भनिन्छ । ईश्वरले आज्ञा दिएको जस्तै सेवाको लागि मनुष्य तयार रहनुपर्छ । उसले पूर्ण सावधानीसंग पाप-पुण्य, यथार्थ-अयथार्थ, श्रेय-अश्रेयको विषयमा विवेक राखेर चल्नुपर्छ ।

अन्तिम र सर्वोच्च स्थान परिष्कृत आचरणको हुन्छ । परिष्कृत आचरणको अर्थ हो, मानवको इच्छा ईश्वरीय इच्छासंग मिल्नु । ईश्वरलाई जे जे अभीष्ट छ मनुष्यलाई पनि त्यही त्यही अभीष्ट हुनुपर्छ, ईश्वरलाई जे अप्रिय लाग्छ मानव-मनमा पनि त्यो अप्रिय प्रतीत हुनुपर्छ । ईश्वरले आफ्नो संसारमा जति अवगुणहरूलाई मन पराउँदैनन् तीदेखि मनुष्य अलग रहनु मात्र होइन तर तिनलाई संसारबाट निर्मूल गर्न आफ्नो सम्पूर्ण शक्ति उपयोग गरून् । त्यस्तै, ईश्वरले जुन सद्गुणहरूद्वारा संसार विभूषित भएको हेर्न चाहन्छन् मानवले ती गुणद्वारा आफ्नो जीवनलाई मात्र अलंकृत गरेर सन्तोष न पानुन् तर आफ्नो प्राणपनले संसारमा तिनको प्रचार र स्थापना गर्ने कोशिष गरून् । यहाँ पुगेपछि मानवले ईश्वरको निकटतम सामीप्य प्राप्त गर्छ अनि यसैले यो मानवको आत्मा-विकासको पराकाष्ठा हो ।

आत्मिक उन्नतिको यो मार्ग व्यक्तिहरूको लागि मात्र नभई संस्था र जातिहरूको लागि पनि हो । एक व्यक्ति जस्तै एउटा जाति पनि धार्मिक विश्वास, अनुवर्तन, संयमका स्थितिहरूबाट अघि बढ्दै परिष्कृत आचरणको सर्वोच्च अवस्थासम्म पुग्नसक्छ अनि एउटा राज्य पनि आफ्नो सम्पूर्ण व्यवस्था-संग विश्वासनिष्ठ, मुस्लिम, संयमशील एवं परिष्कृत आचरणद्वारा मुक्त हुनसक्छ । वास्तवमा इस्लामको उद्देश्य त्यसबेला पूर्ण हुन्छ जब एक सम्पूर्ण जाति यस मार्गको पथिक हुन्छ अनि संसारमा एक संयमशील र परिष्कृत आचरण भएको राज्यको स्थापना हुन्छ ।

अब आध्यात्मिक परिष्कृतिको व्यवस्थामा पनि दृष्टिपात गर्नुहोस् जसलाई

व्यक्ति र समाजलाई यस पद्धति अनुसार निर्माण गर्न इस्लामले ठीक गरेको छ। यो व्यवस्थाको चारवटा स्तम्भ छ।

प्रथम स्तम्भ नमाज हो। यसले प्रतिदिन पाँच पल्ट मनुष्यको मस्तिष्कमा ईश्वरसम्बन्धी स्मृतिलाई भकभकाउँछ, ईश्वरको डर देखाउँछ, उनीप्रति प्रेम जागृत गराउँछ, उनको आदेशलाई घरिघरि सामु ल्याउँछ र उनको अनुवर्तनको अभ्यास गराउँछ। नमाज व्यक्तिगत हुँदैन। सम्पूर्ण समाज सामूहिक रूपमा आध्यात्मिक विकासको मार्गमा अग्रसर होस् भनी नमाजलाई सामूहिक रूपमा कर्तव्य बनाइएको छ।

दोस्रो स्तम्भ 'रोजा' (व्रत) हो जसले वर्षेनी एक महीनासम्म मुस्लिम व्यक्तिहरूलाई व्यक्तिगत रूपमा र मुस्लिम समाजलाई सामूहिक रूपमा 'संयम' (तकवा) को शिक्षा दिइरहन्छ।

तेस्रो स्तम्भ 'जकात' (धर्मादाय) हो जसले मुस्लिमहरूमा त्याग, पारस्परिक सहानुभूति एवं सहयोगको भावना उत्पन्न गराउँछ। हिजआजका मानिसले भूलमा परी 'जकात' लाई 'करको' उपमा दिन्छन्। वास्तवमा 'जकात' को भावना करसम्बन्धी भावनाभन्दा सर्वथा भिन्न छ। 'जकात' शब्दको अर्थ वृद्धि, विकास एवं पवित्रता हो। यसबाट के स्पष्ट हुन्छ भने ईश्वरीय प्रेममा तिमी आफ्ना बन्धुहरूको आर्थिक सहायता गर्छौ जसको फल-स्वरूप तिम्रो आत्माको विकास हुन्छ र आचरणलाई पवित्र बनाउँछ।

चौथा स्तम्भ 'हज्ज' हो। यसले ईश्वरवाद केन्द्रविन्दुता विश्वासनिष्ठ व्यक्तिहरूको एक विश्वव्यापी बन्धुत्वको निर्माण गर्छ र एउटा यस्तो अन्तर्राष्ट्रीय आन्दोलनलाई अग्रसर गराउँछ जो संसारमा शताब्दी-शताब्दीदेखि सत्यको आधारमा सत्यकै अनुकूल चलेर आइरहेको छ अनि ईश्वरले चाहे भने चलिरहने छ।

---

# इस्लाम को जीवन व्यवस्था

## محتوى الكتاب






مطبعة النرجس
ت: ٢٣١٦٦٥٣ ف: ٢٣١٦٨٦٦



المكتب التعاوني للدعوة بالروضة

هاتف: ٤٩٢٧٢٧ عشرة خطوط - فاكس ٤٢٠١١٧٥

رقم حساب الكتب و الزكاة: ٢٠٤٦٠٨٠١٠١٠٩٠٩٢ التبرعات: ٢٠٤٦٠٨٠١٠٦٠٩٠٨٤

حساب الوقف: ٩٦٦٠٨٠١٠١٢٣٠٠٠ بمصرف الراجحي